

# अन्य लोकको सहज यात्रा



कृष्णकृपाश्रीमूर्ति
श्री श्रीमद् अभयचरणारविन्द भक्तिवेदान्त स्वामी प्रभुपाद
संस्थापकाचार्य- अन्तर्राष्ट्रिय कृष्णभावनामृत सङ्घ

॥ श्री गुरु गौराङ्गको जय ॥

# अन्य लोकको सहज यात्रा


कृष्णकृपाश्रीमूर्ति

**श्री श्रीमद् अभयचरणारविन्द भक्तिवेदान्त स्वामी प्रभुपाद**

संस्थापकाचार्यः अन्तर्राष्ट्रिय कृष्णभावनामृत सङ्घ


**अनुवादक- निर्दोष निताई दास**




भक्तिवेदान्त बुक ट्रस्ट

यस ग्रन्थको विषयवस्तु प्रति जिज्ञासु पाठकवर्गलाई भक्तिवेदान्त बुक ट्रस्टद्वारा निम्नलिखित ठेगानामा पत्र–व्यवहार गर्नकालागि आमंत्रित गरिन्छ :

**भक्तिवेदान्त बुक ट्रस्ट**
**हरे कृष्ण धाम**
**जुहू, मुंबई ४०० ०४९, भारत**

**वेबसाइट/ई-मेल :**
www.indiabbt.com
admin@indiabbt.com

**Easy Journey to Other Planets (Nepali)**

1st printing, November 2015: 20000 copies



भक्तिवेदान्त बुक ट्रस्टद्वारा प्रकाशित तथा मुद्रित

AL3T

# विषय-सूची

# प्राक्कथन

एउटा जीवित प्राणी, त्यसमा पनि विशेषगरी सभ्य मानिसहरूसँग अनन्तकालसम्म सुखपूर्वक बाँचिरहने स्वाभाविक चाहना हुन्छ। यो केही हदसम्म स्वाभाविक हो, किनकि जीवात्मा आफ्नो मूलस्वरूपमा शाश्वत एवं आनन्दमय हुन्छ। तर, जीवनको वर्तमान बद्धावस्थामा ऊ बारम्बार आइरहने जन्ममृत्युको चक्रविरूद्धको संघर्षमा प्रवृत्त भइरहेको छ। तसर्थ, उसले न सुख प्राप्त गर्न सकेको छ न अमरता।

वर्तमान समयमा मानव जातिले अन्य लोकको यात्रा गर्ने चाहनालाई विकास गरिरहेको छन्। यो पनि केही हदसम्म स्वाभाविक हो, किनकि उसँग भौतिक तथा अध्यात्मिक आकाशको जुनसुकै भागको भ्रमण गर्ने संवैधानिक अधिकार रहेको हुन्छ। यस्तो किसिमको यात्रा अत्यन्त आकर्षक एवं रोमञ्चक हुने गर्दछ, किनकि यी आकाशहरू पूर्णरूपले विविध विशेषताहरूले युक्त लोकलोकान्तरहरू भरिभराऊ छन्, साथै, अनेकौं प्रजातिका प्राणीहरूद्वारा भरिएका हुन्छन्। ती लोकहरूको यात्रा गर्ने चाहनालाई यौगिक विधिद्वारा सार्थक गर्न सकिन्छ, जसले मानिसहरूलाई यस्तो एउटा माध्यम प्रदान गर्दछ, जसद्वारा तिनीहरू आफूले चाहेको लोकमा जान सक्दछन्। सम्भवतः तिनीहरू शाश्वत एवं आनन्दमय जीवनले युक्त लोकतर्फ जान नसकेता पनि त्यस्ता लोकहरूमा जान सक्दछन् जहाँ विविध किसिमका सुखद शक्तिहरू उपलब्ध हुन्छन्। आध्यात्मिक लोकहरूमा

उपलब्ध स्वतन्त्रतालाई प्राप्त गर्न सक्षम भएका जुनसुकै मानिस पनि जन्म, मृत्यु जरा एवं व्याधिले युक्त यो कष्टपूर्ण भूमिमा फर्केर आउँदैनन् ।

मानिसले व्यक्तिगत प्रयासद्वारा सिद्धिको यो अवस्थालाई सजिलै प्राप्त गर्न सक्दछ । उसले केवल आफ्नै घरमा बसी भक्तियोगको निर्धारित विधिलाई पालना गर्नुपर्दछ । उचित मार्गदर्शनमा रहेर पालना गरिने यो विधि अत्यन्त सरल एवं आनन्ददायक छ । यस पुस्तकमा विशेषगरी सर्वसाधारणहरूलाई दर्शनिक र धर्मवेत्ताहरूलाई भक्तियोगरूपी सर्वोत्तम योग विधिद्वारा कसरी मानिसले आफूलाई अन्य लोकहरूमा परिवहन गराउन सक्दछ भन्ने कुराको जानकारी गराउने प्रयास गरिएको छ ।

**– प्रकाशकीय**

# १

# अलौकिक संसार

भौतिक विज्ञानले अन्ततः एक दिन स्थूल भौतिकवादका लडाकुहरूलाई धेरै अगाडिदेखि अज्ञात रहेको शाश्वत अलौकिक जगत्लाई पत्ता लगाउन सक्ला।

अलौकिकताको बारेमा वर्तमान समयका वैज्ञानिकहरूको अवधारणा अन्तर्गत टाइम्स अफ इन्डियाले अक्टोबर २७, १९५९ मा एउटा समाचार प्रकाशित गरेको थियो :

> स्टकहोम, अक्टोबर २६, १९५९ पदार्थहरू कण र प्रतिकण दुई किसिमले विद्यमान हुन्छन् भन्ने कुरालाई सिद्ध गर्दै एण्टिप्रोटोन (प्रोटोन विरोधी) कणलाई पत्ता लगाएका कारण दुई जना अमेरिकी आणविक वैज्ञानिकहरूलाई १९५९ को नोबेल पुरस्कार प्रदान गरिएको छ। उहाँहरू क्रमशः इटालीका ६९ वर्षीय डा. इमिलो सेग्रे र सान फ्रान्सिस्कोमा जन्मेका डा. ओएन चाम्बेरलियन हुनुहुन्छ। उक्त नवीन सिद्धान्तका अनुमानहरूमध्ये एउटा आधारभूत अनुमान के रहेको छ भने, ब्रह्माण्डमा अलैकिक तत्त्वले निर्मित अर्को कुनै जगत् अथवा अर्को प्रतिलोक हुन सक्दछ।

उक्त अलौकिक जगत् आणविक एवं उप आणविक कणहरूद्वारा निर्मित हुन्छ, जुन हामीहरूलाई थाहा भएअनुसारका ग्रहहरूको घुमाई भन्दा विपरीत कक्षतर्फ घुमिरहेको हुन्छ। यदि यी दुई जगत्हरू कुनै

दिन एक आपसमा ठोक्किन पुगे भने तिनीहरू दुवै एउटै झटकाको अन्धकारमय प्रकाशमा नष्ट हुनेछन् ।

यस कथनमा निम्नलिखित प्रस्तावहरूलाई उल्लेख गरिएको छ :

१) यस भौतिक जगत्मा एउटा अलौकिक अणु एवम् परमाणु विद्यमान रहेको छ, जुन भौतिक अणुविरोधी गुणहरूद्वारा निर्मित हुन्छ ।

२) यो भौतिक जगत्भन्दा पर अर्को एउटा जगत् छ, जसको बारेमा हामीसँग केवल सीमित अनुभव छ ।

३) लौकिक एवं अलौकिक जगत् कुनै निश्चित समयमा ठोक्किएर एक अर्कालाई नष्ट गर्न सक्दछन् ।

यी तीन कल्पनाहरूमध्ये हामी आस्तिकवादी विद्यार्थीहरू १ र २ को कथनसँग पूर्ण सहमत छौं तर, कथन ३ सँग भने हामीहरू केवल पदार्थविरोधी तत्त्वको सीमित वैज्ञानिक परिभाषाभित्र रहेर मात्र सहमत हुन सक्दछौं । यहाँ कुन कुरामा कठिनाइ छ भने अलौकिक तत्त्वसम्बन्धी अध्ययन गर्ने वैज्ञानिकका पदार्थविरोधी अवधारणाहरू केवल भौतिक शक्तिका अन्य विविधताहरूसम्म मात्रै सिमित छन् । तर, जहाँसम्म अलौकिक तत्त्वको कुरा छ यो पूर्ण रूपमा अलौकिक नै हुनुपर्दछ । पदार्थ गठन भएअनुसार नष्ट हुने तत्त्व हो, तर यदि सम्पूर्ण भौतिक लक्षणहरूद्वारा मुक्त हुनेछ भने अलौकिक तत्त्व स्वाभाविक रूपले स्वतन्त्र र अविनाशी छ भन्ने कुरा जान्नुपर्दछ । यदि पदार्थ नाश्वान् एवं पृथक्करणीय छ भने अलौकिक तत्त्व पनि अविनाशी एवं पृथक्करणीय हुनुपर्दछ । अब हामी यी प्रस्तावहरूलाई विश्वासनीय शास्त्रीय दर्शनको दृष्टिकोणबाट चर्चा गर्ने प्रयास गर्नेछौं ।

वेद नै विश्वमा सर्वाधिक मान्यता प्राप्त शास्त्र हो । वेदलाई साम, यजुर्, ऋक् एवं अथर्व गरी चार भागमा विभाजित गरिएको छ। वेदमा वर्णित विषयवस्तुहरू सामान्य विवेक भएका मानिसहरूले बुझ्न निकै कठीन हुन्छ । चार वेदहरूको अर्थ स्पष्ट पार्नका लागि तिनीहरू महाभारत एवं अठार पुराण नामले प्रसिद्ध एतिहासिक काव्यमा वर्णित छन् । रामायण पनि आवश्यक सम्पूर्ण वैदिक जानकारीहरूले युक्त एउटा ऐतिहासिक काव्य हो। अतः चार वेदहरू, वाल्मीकि ऋषीद्वारा रचित मूल रामायण, महाभारत एवं पुराणहरूलाई वैदिक साहित्यका रूपमा वर्गीकरण गरिएको छ । उपनिषद्हरू चतुर्वेदका अङ्गहरू हुन् र वेदान्तसूत्र वेदको सार हो । यी सम्पूर्ण वैदिक शास्त्रहरूको सार श्रीमद्भावतद्गीतालाई नै सम्पूर्ण उपनिषद्को सार एवं वेदान्त सूत्रको मूलभाष्य मानिएको छ। अतः निष्कर्ष के हो भने मानिसले केवल श्रीमद्भगवद्गीताबाट नै वेदको सार बुझ्न सक्दछ किनकि श्रीमद्भगवद्गीता स्वयं परमपुरुष भगवान् श्रीकृष्णका मुखारविन्दबाट निःसृत अमृतवाणी हो, र उहाँ उत्कृष्ट (परा) शक्तिका बारेमा पूर्ण ज्ञान प्रदान गर्नका लागि अलौकिक जगत्देखि यस लैकिक जगत्मा अवतरित हुनुभएको थियो ।

परमुरुष भगवान्को उत्कृष्ट प्रकृतिलाई भगवद्गीतामा 'परा प्रकृति' का रूपमा व्याख्या गरिएको छ । वैज्ञानिकहरूले हालसालै ब्रह्माण्डमा दुई किसिमका नाशवान् तत्त्वहरू हुन्छन् भन्ने कुरा खोज गरेका छन्, तर भगवद्गीतामा पूर्णतया पदार्थ एवं अपदार्थ (अलौकिक तत्त्व)को अवधारणालाई शक्तिका दुई स्वरूपमा व्याख्या गरिएको छ । पदार्थ एउटा शक्ति हो, जसले यो भौतिक जगत्लाई सृष्टि गर्दछ साथै त्यही शक्तिले आफ्नो उत्कृष्ट (परा) स्वरूपमा अलौकिक (दिव्य) जगत्को सृष्टि गर्दछ। जीवात्माहरू उत्कृष्ट (परा)

शक्तिका कोटीभित्र पर्दछन्। निकृष्ट शक्ति अथवा भौतिक शक्तिलाई अपरा प्रकृति भनिन्छ। यसप्रकार, भगवद्गीतामा सृजनात्मक शक्तिलाई अपरा प्रकृति एवं परा प्रकृति नामक प्रकृतिका दुई स्वरूपमा व्याख्या गरिएको छ।

पदार्थ आफैँसँग केही पनि सिर्जना शक्ति हुँदैन। जब यसलाई जीवित शक्तिले उपयोग गर्दछ, भौतिक वस्तुहरूको निर्माण हुन पुग्दछ। तसर्थ, पदार्थ आफ्नो अपरिपक्व अवस्थामा परमात्माकै प्रच्छन्न शक्तिका रूपमा रहेको हुन्छ। जब हामी शक्तिका बारेमा विचार गर्दछौं, हामीहरूले स्वाभाविकरूपमा शक्तिको स्रोतका बारेमा विचार गर्नुपर्दछ। उदाहरणार्थ, जब हामी विद्युतीय शक्तिको बारेमा विचार गर्दछौं, हामी तत्काल विद्युत उत्पादन गर्ने विद्युत्गृहको बारेमा विचार गर्न पुग्दछौं। शक्ति आफैंमा पर्याप्त हुँदैन। यो त उत्कृष्ट जीवात्माद्वारा अधीनस्थ हुन्छ। उदाहरणार्थ, अग्नि प्रकाश एवं ताप नामक अन्य दुई शक्तिहरूको स्रोत हो। अग्निविना प्रकाश एवं तापको कुनै स्वतन्त्र अस्तित्व हुँदैन। त्यसैगरी, निकृष्ट एवं उत्कृष्ट शक्तिलाई कुनै एउटा स्रोतबाट विभाजित गरिएको छ, जसलाई मानिसले कुनै पनि नामद्वारा सम्बोधन गर्न सक्दछ। शक्तिको त्यो स्रोत एउटा परमजीव हुनुपर्दछ जो सम्पूर्ण कुराहरूको चेतनाले युक्त हुनुहुन्छ। त्यस्ता परमजीव नै परमपुरुष भगवान् श्रीकृष्ण अथवा सर्वाकर्षक आत्मा हुनुहुन्छ।

वेदमा परमजीव अथवा परमसत्यलाई 'भगवान्' भनी सम्बोधन गरिएको छ जसको अर्थ "ऐश्वर्यवान्" हो। भगवान् नै उक्त जीवात्मा हुनुहुन्छ जो सम्पूर्ण शक्तिहरूका आधारशिला हुनुहुन्छ। आधुनिक वैज्ञानिकहरूद्वारा पत्ता लगाइएका शक्तिका दुई सीमित स्वरूपहरू त विज्ञान विकासका आरम्भ मात्रै हुन्। तर, अब भने तिनीहरू ती दुई

कण एवं अणुहरूलाई पत्ता लगाउन अगाडि बढ्नुपर्ने छ, जसलाई तिनीहरूले भौतिक एवं अभौतिक तत्त्वका रूपमा परिभाषित गरेका छन् ।

अभौतिक तत्त्वलाई कसरी वर्णन गर्न सकिन्छ ? हामीहरूसँग भौतिक तत्त्व तथा अणुहरूसँगको अनुभव भएतापनि अलौकिक अणुहरूको बारेमा केही पनि अनुभव छैन । तर, भगवद्गीतामा भने स्पष्टरूपले अलौकिक कणको बारेमा निम्निलिखित व्याख्या गरिएको छ । यो अलौकिक कण जड शरीरभित्र नै हुन्छ । यही अलौकिक कणको उपस्थितिका कारण जड शरीर क्रमशः बाल्यावस्थादेखि युवावस्था, युवावस्थदेखि वृद्धावस्थासम्म परिवर्तन भइरहेको हुन्छ । साथै, वृद्धावस्थापछि यो अलौकिक तत्त्वले काम नलाग्ने वृद्ध शरीरलाई परित्याग गरी अर्को जड शरीर धारण गर्दछ ।

जीवित शरीरको बारेमा गरिएको यो बयानले शक्ति दुई वटा स्वरूपमा विद्यमान रहेको हुन्छ भन्ने वैज्ञानिक खोजलाई पुष्टि गर्दछ । यदि यी शक्तिहरूमध्ये अलौकिक तत्त्वलाई जड शरीरबाट अलग गरिदिने हो भने शरीर सम्पूर्ण कार्यहरूका लागि निरर्थक बन्न पुग्दछ । अतः अलौकिक कण निःसन्देह भौतिक शक्तिभन्दा माथि छ ।

वस्तुतः कसैले पनि भौतिक शक्ति नष्ट हुँदा शोक गर्नुहुँदैन । शीत, उष्ण, सुखदुःख लगायत सम्पूर्ण किसिमका परिवर्तनहरू इन्द्रियबोधबाट उत्पन्न हुने विषयहरू हुन् । ती अन्य केही नभएर कालक्रममा आउनेजाने ऋतु जस्ता जड शक्तिका अन्तर्क्रियाहरू मात्रै हुन् ।

यस्ता भौतिक अन्तर्क्रियाहरूका अस्थाई प्राकट्य एवं अप्राकट्यले युक्त जड शरीर जीवात्मा तथा

आत्मशक्तिभन्दा निकृष्ट भौतिक शक्तिद्वारा निर्मित हुन्छ भन्ने कुरालाई यहाँ पुष्टि गरिएको छ ।

सुख दुःखबाट विचलित नहुने जुनसुकै बुद्धिमान् व्यक्तिले पनि ती विषयहरू त निकृष्ट शक्तिका अन्तर्क्रियाहरूद्वारा उत्पन्न हुने विभिन्न भौतिक अवस्थाहरू मात्रै हुन् भन्ने कुरा जान्दछ र ऊ अलौकिक जगत्लाई पुनः प्राप्त गर्न योग्य बन्दछ, जहाँ जीवन सच्चिदानन्दमय हुन्छ ।

यहाँ हामीहरूले अलौकिक जगत्को वर्णनलाई उल्लेख गरेका छौं । साथै, अलौकिक जग्तमा कुनै पनि मौसमी उत्तार–चढावहरू हुँदैनन् भन्ने जानकारी पनि प्रदान गरेका छौं । त्यहाँ सम्पूर्ण कुराहरू शाश्वत, आनन्दमय एवं चिन्मय हुन्छन् । तर, जब हामी अलौकिक जगत्लाई "जगत्"का रूपमा सम्बोधन गर्दछौं, त्यहाँ हाम्रा लौकिक अनुभवहरूभन्दा पर रहेका विविध स्वरूप एवं साज-सामग्रीहरू उपलब्ध हुन्छन् भन्ने कुराको कल्पना गर्न सक्दछौं ।

भौतिक शरीर नशवान् छ र साथै यो अस्थायी एवं परिवर्तनशील छ । अतः यही कारणले गर्दा यसलाई भौतिक संसार भनिएको हो । तर, अलौकिक जीवात्मा भने अविनाशी हुन्छ र त्यही कारणले गर्दा ऊ शाश्वत हुन्छ । यसरी, दक्ष वैज्ञानिकहरूले भौतिक एवं अभौतिक कणहरूका विभिन्न विशेषताहरूलाई क्रमशः शाश्वत एवं अशाश्वत कणका रूपमा भेद गरेका छन् ।

तर, अझै पदार्थका दुई स्वरूपहरूको खोजले अभौतिक पदार्थको विशेषताहरूलाई पत्ता लगाउनुपर्ने छ । तर, भगवद्गीताभित्र यस विषयमा पहिले नै स्पष्ट व्याख्या गरिएको छ । वैज्ञानिकहरूले भगवद्गीताका यी अमूल्य

जानकारीहरूलाई आधार मान्दै आफ्नो खोज एवं अनुसन्धानलाई अगाडि बढाउन सक्दछन् ।
अलौकिक कण जड कणभन्दा पनि अति सूक्ष्म हुन्छ । भौतिक शरीरभरि जताततै आफ्नो प्रभाव फैलाउने यो प्राण शक्ति अत्यन्त शक्तिशाली हुन्छ । जड कणको अपेक्षा अलौकिक कण अपरीमित हुन्छ र यही कारणले गर्दा यो नाशवान हुँदैन ।

यो अरू केही नभएर भगवद्गीतामा वर्णित अलौकिक कणको प्रारम्भिक व्याख्यान मात्रै हो । यसलाई तल यसरी वर्णन गरिएको छ :

अलौकिक कणको सूक्ष्मतम् स्वरूप स्थूल एवं सूक्ष्म भौतिक शरीरभित्र धुनिएको हुन्छ । भौतिक शरीर (स्थूल एवं सूक्ष्म दुवै) नष्ट भएता पनि सूक्ष्म अलौकिक कण भने शाश्वत रहन्छ । तसर्थ, मानिसले आफ्नो चाहनालाई शाश्वत विष( ायतर्फ उन्मुख गराउनुपर्दछ ।

जब भौतिकवादी वैज्ञानिकहरूले अलौकिक कणको विशेषतालाई जान्न एवं उसलाई अशाश्वत जड कणहरूको सम्पर्कबाट मुक्त गराउन सक्दछन् तब मात्रै विज्ञान सार्थक हुने छ । यस्तो मुक्तिले वैज्ञानिक उन्नतिको चरमचुलीलाई दर्शाउदछ ।

यस भौतिक ब्रह्माण्डमा अभौतिक परमाणुहरूद्वारा निर्मित एउटा जगत्को अस्तित्व हुन सक्दछ र त्यही जगत् एवं भौतिक जगत् बीच टक्कर हुने छ र फलस्वरूप दुवै जगत् नष्ट हुने छन् भन्ने वैज्ञानिहरूको मतमा केही आंशिक सत्यता भने रहेकोछ । यस ब्रह्माण्डभित्र निरन्तर टक्कर भइरहेको हुन्छ जसअन्तर्गत प्रत्येक क्षण जड कणहरू नष्ट भइरहेका छन् र अलौकिक कणहरू मोक्षका

लागि संघर्षरत छन् । यो कुरालाई भगवद्गीतामा यसरी व्याख्या गरिएको छ :

'जीवात्मा भनेर चिनिने अलौकिक कणले जड कणलाई क्रियाशील गराउँदछ । यो जीवात्मा सधैं अविनाशी हुन्छ । जबसम्म अलौकिक कण स्थूल एवं सूक्ष्म शरीरका रूपमा विदित भौतिक शक्तिभित्र कैद भइरहन्छ तबसम्म त्यो सत्ता एउटा जीवित इकाईका रूपमा विद्यमान भइरहन्छ । ती दुई तत्त्वहरूबीच हुने अविच्छिन्न टक्करका दौरान अलौकिक तत्त्व भने कहिल्यै नष्ट हुँदैन । कसैले पनि भूत, भविष्य र वर्तमान कुनै पनि समयमा त्यसलाई नष्ट गर्न सक्दैन ।

अतःहामीहरूले के विचार गर्नु पर्दछ भने दुवै भौतिक एवं अभौतिक जगत् दुवै नष्ट हुने गरी एक आपसमा ठक्कर खाने छन् भन्ने वैज्ञानिकहरूको अवधारणा केवल अभौतिक तत्त्वसम्बन्धी तिनिहरूले दिएका व्याख्यासँग मात्र मेल खाने छ । भगवद्गीतामा अलौकिक कणको प्रकृतिलाई व्याख्या गरिएको छ, जुन कहिल्यै नष्ट हुँदैन ।

उत्तम एवं अपरिमित अभौतिक तत्त्व सधैं अविनाशी, स्थायी एवं शाश्वत हुन्छ । तर, कुनै निश्चित समयपश्चात् जड कणहरूद्वारा ऊस माथि लगाइएको बन्धन भने नष्ट हुन्छ । यही सिद्धान्त भौतिक एवं अभौतिक जगत्हरूको प्रसङ्गमा पनि लागु हुन्छ । कोही पनि अलौकिक तत्त्व नष्ट हुन्छ भन्ने कुराले भयभीत हुनुहुँदैन । किनकि भौतिक जगत्को अन्त हुँदा पनि यो जीवित नै रहन्छ ।

सृष्टि गरिएका सम्पूर्ण वस्तुहरू केही निश्चित समयपश्चात् नष्ट हुने छन् । भौतिक शरीर एवं भौतिक जगत्, दुवै सृष्टि गरिएका

हुन् । तसर्थ, तिनीहरू नष्ट हुने विषयमा पर्दछन् । तर, अलौकिक तत्त्व भने कहिल्यै सृष्टि गरिएको हुँदैन र फलतः यो कहिल्यै नष्ट पनि हुँदैन । यो कुरालाई भगवद्गीतामा विस्तृत व्याख्या गरिएको छ :

अलौकिक तत्त्व, जुन जीवित शक्ति हो, कहिल्यै सृष्टि एवं उत्पत्ति भएको हुँदैन । यो तत्त्व शाश्वत रहिरहन्छ । यस तत्त्वको न जन्म मिति छ न मृत्युको मिति नै । यो तत्त्वलाई न त बारम्बार सृष्टि गर्न सकिन्छ, न बारम्बार विनाश नै । यो तत्त्व शाश्वतरूपले जीवित रहन्छ र त्यहीकारण ऊ पुरातन भन्दा पनि पुरातन हुनुका साथै सर्वथा नवीन भइरहन्छ । जडतत्त्व नष्ट भएता पनि अभौतिक तत्त्व भने कहिल्यै नष्ट हुँदैन ।

साथै, यो सिद्धान्त अलौकिक ब्रह्माण्ड एवं लौकिक कण, दुवैका लागि प्रयोगसिद्ध छ । जब भौतिक जगत्को अन्त हुन्छ, अलौकिक ब्रह्माण्ड भने सम्पूर्ण परिस्थितिमा पनि रहि नै रहन्छ । यो कुरालाई पछि अझै विस्तारपूर्वक वर्णन गरिने छ ।

वैज्ञानिकहरूले भगवद्गीताबाट तल उल्लिखित जानकारी प्राप्त गर्न सक्दछन् :

विद्वान् मानिस, जसलाई राम्रोसँग अलौकिक कण अविनाशी छ भन्ने कुराको ज्ञान हन्छ, उसले कुनै पनि साधनद्वारा यसलाई नष्ट गर्न सकिँदैन भन्ने कुरा जानेको हुन्छ ।

एउटा आणविक वैज्ञानिकले भौतिक जगत्लाई आणविक अस्त्रद्वारा नष्ट गर्ने विचार गर्न सक्दछ, तर उसका अस्त्रहरूले अलौकिक जगत्लाई नष्ट गर्न सक्दैनन् । अलौकिक कणहरूलाई अझै स्पष्टरूपले निम्निलिखित वाक्यहरूमा वर्णन गरिएको छ ।

यसलाई न त कुनै भौतिक आयुधद्वारा नष्ट गर्न सकिन्छ न अग्निद्वारा नै जलाउन सकिन्छ। यसलाई न त जलद्वारा भिजाउन सकिन्छ न वायुद्वारा उडाउन, सुकाउन र सकिन्छ न वाष्पीकरण नै गर्न सकिन्छ । यो अविभाज्य, उज्वलनशीलता एवं अघुलनशील छ। शाश्वत भएका कारण यो कुनै पनि शरीरभित्र प्रवेश गर्न एवं त्यसलाई परित्याग गर्न सक्षम छ। यसको स्वरूपद्वारा नै यो अटल भएका कारण यसका विशेषताहरू सधैं अचल छन्। सम्पूर्ण भौतिक विशेषताहरूको विरोधी भएका कारण यो सामान्य मस्तिष्कद्वारा अचिन्त्य छ। यो अपरिवर्तनशील छ। अतः कसैले पनि जुन कुरा शाश्वत छ त्यो अलौकिक तत्त्वका बारेमा कहिल्यै शोक गर्नुहुँदैन।

यसप्रकार, भगवद्गीता लगायत सम्पूर्ण वैदिक साहित्यहरूमा उत्कृष्ट शक्ति (अलौकिक तत्त्व) लाई एउटा जीवनशक्ति अथवा जीवात्माका रूपमा स्वीकार गरिएको छ। यसलाई जीव तत्त्व पनि भनिन्छ । यो जीवतत्त्वलाई कुनै पनि भौतिक पदार्थहरूको संयोजनद्वारा सृष्टि गर्न सकिँदैन। यस भौतिक जगत्मा आठ भौतिक तत्त्वहरू छन्, जसलाई निकृष्ट प्रकृतिका रूपमा व्याख्या गरिएको छ। ती आठ तत्त्वहरू क्रमशः १) अग्नि, २) जल, ३) वायु, ४) पृथ्वी, ५) आकाश, ६) मन, ७) बुद्धि र ८) अहंकार हुन्। यीबाहेक एउटा जीवन शक्ति अथवा अलौकिक तत्त्व छ जसलाई उत्कृष्ट शक्तिका रूपमा व्याख्या गरिएको छ। यिनीहरूलाई शक्ति भनिन्छ किनकि तिनीहरू परमपुरुष भगवान् श्रीकृष्णद्वारा क्रियाशील एवं नियन्त्रित भइरहेका हुन्छन्।

धेरै समयसम्म भौतिकवादी विज्ञान, माथि वर्णन गरिएअनुसारका आठ तत्त्वहरूमा नै सीमित रहेका थिए। तर, यतिबेला भने उससँग अभौतिक तत्त्व एवं अलौकिक ब्रह्माण्डका बारेमा थोरै भएपनि प्राथमिक जानकारी रहेको कुरा केही उत्साहपूर्ण छ। हामी यो कुरामा आशावादी छौं कि समयको उन्नतिसँगै भौतिक विज्ञान अलौकिक जगत्‌को मूल्यलाई आँकलन गर्न सक्षम हुने छ,जसमा भौतिक तत्त्वको कुनै पनि संकेत पाइने छैन। निःसन्देह "अलौकिक" शब्दले यस्तो तत्त्वलाई संकेत गर्दछ, जुन सम्पूर्ण जड विशेषताहरूको विपरीत हुन्छ।

वस्तुतः संसारमा त्यस्ता मनोधर्मीहरू पनि छन्, जसले अलौकिक तत्त्वका बारेमा आफ्नै टीका-टिप्पणीहरू दिने गर्दछन्। मुख्यतः त्यस्ता मनोधर्मीहरूका दुई वर्गहरू छन् । साथै तिनीहरू दुई त्रुटिपूर्ण निष्कर्षमा पुग्दछन्। तिनीहरू मध्ये एउटा वर्ग स्थूल भौतिकवादीहरू हुन्, जसले या त अलौकिक तत्त्वलाई अस्वीकार गर्दछन् अथवा कुनै निश्चित अवस्था (मृत्यु) पश्चात जड तत्त्वहरूको संयोजन विघटित हुन्छ भन्ने विचारलाई सत्य मान्दछन्। अर्को वर्गले भने अभौतिक तत्त्वलाई सीधै भौतिक तत्त्व अन्तर्गतका चौबिस तत्त्वहरूभन्दा विपरीत तत्त्व मान्दछन् । यो वर्गलाई साङ्ख्यवादी भनिन्छ । तिनीहरूले भौतिक तत्त्वहरूलाई अनुसन्धान गर्दछन् र ती तत्त्वहरूलाई सूक्ष्म विश्लेषण गर्दछन्। आफ्नो अनुसन्धानको अन्तमा साङ्ख्यवादीहरूले केवल चिन्मय (अभौतिक) तत्त्वलाई मान्दछन्, जुन निष्क्रिय हुन्छ। तर, यी सम्पूर्ण मनोधर्मीहरूले कठिनाइको सामना गर्नुपर्दछ, किनकि तिनीहरूले भौतिक शक्तिको मद्दतद्वारा तत्त्वको कल्पना गर्दछन् । तिनीहरूले उत्कृष्ट शक्तिबाट जानकारी ग्रहण गर्दैनन्। अलौकिक तत्त्वको वास्तविक स्थितिलाई साक्षात्कार गर्नका लागि मानिस उत्कृष्ट शक्तिको दिव्य धरातलसम्म आइपुग्नुपर्दछ।

भक्तियोग नै उत्कृष्ट शक्ति अन्तर्गतको वास्तविक क्रिया हो।

भौतिक जगत्को स्तरबाट कसैले पनि अलौकिक जगत्को वास्तविक स्थितिलाई आँकलन गर्न सक्दैनन् । तर, परमपुरुष भगवान्ले अहैतुकी कृपावश अवतार लिनुहुन्छ र हामीहरूलाई अलौकिक जगत्का बारेमा सम्पूर्ण जानकारी प्रदान गर्नुहुन्छ । यसप्रकार हामीहरूले अलौकिक जगत् के हो भन्ने कुरा जान्न सक्दछौं । हामीहरूलाई जानकारी भएअनुसार परमपुरुष भगवान् एवं जीवात्मा दुवै गुणात्मकरूपले अभौतिक हुन्छन् । त्यसकारण जीवात्मालाई बृहत रूपले अध्ययन अनुसन्धान गरी हामीहरूले परमपुरुष भगवान् एवं जीवात्मा दुवै गुणात्मकरूपले अभौतिक हुन् भन्ने कुराको बारेमा जानकारी प्राप्त गर्न सक्दछौं । प्रत्येक जीवात्मा एउटा स्वतन्त्र पुरुष हो । अतः परमजीव पनि परमपुरुष हुनुपर्दछ । वैदिक शास्त्रहरूमा भगवान् श्रीकृष्ण नै यथायोग्य परम पुरुष मानिनुभएको छ । परमेश्वर भनेर सम्बोधित "कृष्ण" नाम नै परम सत्ताको एउटै मात्र वास्तविक र बोधगम्य नाम हो । उहाँ दुवै भौतिक एवं आध्यात्मिक शक्तिहरूका स्वामी हुनुहुन्छ । यही 'कृष्ण' शब्दले उहाँ नै परमेश्वर हुनुहुन्छ भन्ने कुरालाई सिद्ध गर्दछ । भगवद्गीतामा भगवान्ले तल लेखिएअनुसार यो कुरालाई पुष्टि गर्नुभएको छ :

> उहाँद्वारा भौतिक एवं अभौतिक गरी दुई वटा जगत्को सृष्टि गरिएको छ । तीमध्ये भैतिक जगत् गुणात्मकरूपले आठ जड तत्त्वहरूमा विभाजित निकृष्ट शक्तिद्वारा निर्मित भएको छ भने अलौकिक जगत् चाहीँ गुणात्मकरूपले उत्कृष्ट शक्तिद्वारा निर्मित भएको छ ।
>
> ती दुवै लौकिक एवं अलौकिक शक्तिहरू परम दिव्य परमेश्वरका सृष्टिहरू भएका कारण परमेश्वर कृष्ण नै

सम्पूर्ण सृष्टि एवं विनाशका परम कारण हुनुहुन्छ भन्ने कुराको निष्कर्ष दिनु उचित हुन्छ।

भगवान्‌का दुइ शक्तिहरू (उत्कृष्ट एवं निकृष्ट) ले लौकिक एवं अलौकिक जगत्‌को सृष्टि गरेका कारण, उहाँनै परमसत्य हुनुहुन्छ। यसप्रकार, भगवान् कृष्णले भगवद्‌गीतामा भन्नुभएको छः:

हे अर्जुन ! म नै सम्पूर्ण कुराको श्रोत हुँ र म भन्दा ठुलो कोही पनि छैन । जसरी मोतीका दानाहरू धागामा उनिएका हुन्छन् त्यसैगरी सम्पूर्ण कुराहरू म माथि नै आश्रित रहन्छन् ।

वास्तवमा धेरै पहिलेदेखि लौकिक एवं अलौकिक जगत्‌सम्बन्धी तत्वहरुको खोजको विषयलाई भगवद्‌गीताका पृष्ठहरूमा चित्रण गरिएको छ। गीताको यो दर्शन पहिल्यै सूर्यलोकका अधिष्ठाता देवता सूर्यदेवलाई सुनाइएको थियो भन्ने तथ्यलाई गीताभित्र नै औंल्याइएको छ । परमपुरुष भगवान्‌द्वारा भगवद्‌गीताको ज्ञान कुरुक्षेत्रको युद्ध हुनुभन्दा पनि धेरै पहिले लगभग १२०,०००,००० वर्ष पहिले प्रतिपादित थियो भन्ने कुरा हामी भन्दछौं । आजकल आधुनिक विज्ञानले त मात्र भगवद्‌गीताभित्र उपलब्ध सत्यको एउटा सानो अंशलाई मात्रै पत्ता लगाएको छ ।

भगवद्‌गीता भित्र अलौकिक ब्रह्माण्डको परिकल्पनालाई प्राप्त गर्न सकिन्छ। यसका अतिरिक्त उपलब्ध भएका सम्पूर्ण तथ्यहरूद्वारा हामीहरूले अलौकिक जगत् अलौकिक आकाशमा अवस्थित छ भन्ने कुरामा अलिकति पनि शंका गर्नुहुँदैन । यही आकाशलाई भगवद्‌गीताभित्र एवं सनातन धाममा शाश्वत प्रकृति भनी व्याख्या गरिएको छ ।

जसरी जड अणुहरूले जड जगत्‌को सृष्टि गर्दछन्, त्यसैगरी

अलौकिक अणुहरूले त्यहाँभित्र रहेका सजसामग्रीहरूसहित अलौकिक (आध्यात्मिक) जगत्को सृष्टि गर्दछन्। अलौकिक जगत्भित्र अलौकिक प्राणीहरू निवास गर्दछन्। त्यस अलौकिक जगत्मा कुनै पनि त्यस्तो अचल जड तत्त्व पाईंदैन। त्यहाँ उपलब्ध हुने सम्पूर्ण कुराहरू जीवित तत्त्वहरू हुन् र त्यस स्थानका परमपुरुष स्वयम् भगवान् हुनुहुन्छ। अलौकिक जगत्का निवासीहरूको जीवन 'सत्-चिद्-आनन्दमय' हुन्छ। अर्को शब्दमा भन्नुपर्दा, तिनीहरूसँग भगवान्मा हुने सम्पूर्ण गुणहरू हुन्छन्।

यस भौतिक जगत्भित्रको सर्वोच्च लोकलाई सत्यलोक अथवा ब्रह्मलोक भनिन्छ। यस लोकमा ब्रह्माण्डकै सबैभन्दा पुण्यवान् सिद्ध प्राणीहरू निवास गर्दछन्। ब्रह्मलोकका अधिष्ठाता देवता ब्रह्माजी हुनुहुन्छ जो यस जड् जगत्का प्रथम सृजित जीवात्मा हुनुहुन्छ। ब्रह्माजी पनि हामीहरू जस्तै जीवात्मा हुनुहुन्छ, तर उहाँ यस जड जगत्कै सबैभन्दा गुणवान् एवं पूण्यवान् व्यक्तित्व हुनुहुन्छ। उहाँ भगवान्को कोटीमा पर्नुहुने गरी गुणवान् हुनुहुन्न, तर भगवान्बाट प्रत्यक्ष अधीनस्थ जीवात्माहरूका कोटीमा पर्नुहुन्छ। भगवान् एवं जीवात्मा दुवै अलौकिक जगत्का निवासीहरू हुन्। त्यसोभए अलौकिक जगत्को बनावट कस्तो छ? त्यो जगत् कसरी सञ्चालित छ? त्यहाँको वस्तुस्थिति कस्तो छ? त्यहाँका अधिष्ठाता देवताहरू कोको हुन्? भन्ने जस्ता कुराहरूको खोज गरी वैज्ञानिकहरूले सबैको कल्याण गर्न सक्दथे। वैदिक शास्त्रहरूमध्ये श्रीमद्भागवतमा यी विषयवस्तुहरूमाथि विस्तृत व्याख्या गरिएको छ। भगवद्गीता श्रीमद्भागवतको प्रारम्भिक अध्ययन हो। वैज्ञानिक जगत्का सम्पूर्ण मानव समाजले यी दुई महत्त्वपूर्ण ग्रन्थहरूलाई अत्यन्त राम्रोसँग अध्ययन गर्नुपर्दछ। यी ग्रन्थहरूले वैज्ञानिक उन्नतिका लागि धेरै

सूत्रहरू प्रदान गर्नुका साथै धेरै नवीन खोजहरूको पनि सूत्रपात गर्दछन् ।

अध्यात्मवादी एवं भौतिकवादीहरू मानव जातिका दुई पृथक वर्गहरू हुन् । अध्यात्मवादीहरू वेदलगायत प्रामाणिक शास्त्रहरूद्वारा ज्ञान आर्जन गर्दछन् । वैदिक शास्त्रहरू दिव्य गुरुशिष्य परम्पराको शृङ्खलाद्वारा प्राप्त हुन्छ । भगवद्गीतामा गुरुशिष्य परम्पराका बारेमा पनि उल्लेख गरिएको छ । हजारौं लाखौं वर्ष पहिले भगवद्गीताको ज्ञान सूर्यलोकका अधिष्ठाता देवता सूर्यदेवलाई सुनाइएको कुरा भगवान् कृष्ण भगवद्गीतामा बताउनुहुन्छ । साथै, यही ज्ञान सूर्यदेवले आफ्ना छोरा मनुलाई बताएका थिए जसबाट वर्तमान मानव वंशको उदय भएको थियो । त्यसपछि मनुले यो ज्ञान आफ्ना पुत्र इक्ष्वाकुलाई प्रदान गरेका थिए जसको वंशमा जो- साक्षात् भगवान् रामचन्द्र प्रकट हुनुभएको थियो । दीर्घरूपले विस्तारित यही गुरुशिष्य परम्परा भगवान् श्रीकृष्णको उदयकालसम्म आइपुग्दा (पाँच हजार वर्षपूर्व) लुप्त हुन पुगेको थियो र यही परम्परलाई पुनःस्थापित गर्नका लागि यस युगमा भगवान् कृष्णले अर्जुनलाई आफ्ना प्रथम शिष्य बनाएर भगवद्गीताको पूनर्वाचन गर्नुभएको थियो र त्यही पुरातन ज्ञान प्रदान गर्नुभएको थियो । अतः यस युगमा अध्यात्मवादीहरू अर्जुनबाट प्रारम्भ भएको गुरुशिष्य परम्परामा आबद्ध हुन्छन् । आफूलाई भौतिकवादी खोजपूर्ण कार्यहरूको कठिनाईबाट मुक्त पार्दै अध्यात्मवादीहरू परिपूर्ण मार्ग (गुरुशिष्य परम्परा) द्वारा लौकिक एवं अलौकिक तत्त्वसँग सम्बन्धीत यथार्थ ज्ञान आर्जन गर्दछन् । यसरी, आफूलाई तिनीहरूले अतिरिक्त झन्झटबाट उद्धार गर्दछन् ।

तर, स्थूल भौतिकवादीहरू भने परमेश्वरको अलौकिक जगत्माथि विश्वास गर्दैनन् । अतः कहिलेकाहीं अत्यन्त गुणवान्,

ज्ञानवान् एवं प्रगतिशील व्यक्तिहरूका रूपमा देखिए पनि तिनीहरू दुर्भाग्यशाली प्राणीहरू हुन् । तिनीहरू जड जगत्को प्रभावद्वारा मोहित भएका हुन्छन् र अलौकिक जगत्को ज्ञानबाट विमुख भएका हुन्छन् । तर, वर्तमान समयमा भौतिकवादी वैज्ञानिकहरू पनि क्रमशः अलौकिक जगत्को मार्गमा अगाडि बढिरहेका छन्, जुन एउटा राम्रो लक्षण हो । सम्भवतः तिनीहरू उक्त अलौकिक जगत्को जानकारी प्राप्त गर्ने कार्यमा सक्षम हुने छन्, जहाँ साक्षात् परमपुरुष भगवान् त्यहाँका अधिष्ठाता देवताका रूपमा विराजमान हुनुभएको छ, जहाँ सम्पूर्ण जीवात्माहरू उहाँसँगै बसी उहाँको सेवामा तल्लीन भइरहेका हुन्छन् । परमपुरुष भगवान्को सेवामा तल्लीन रहेका जीवात्माहरू गुणात्मक रूपले भगवान् समान हुन्छन् र एकैसाथ तिनीहरू भगवान्द्वारा सेवकका रूपमा पोषित भएका हुन्छन् । अलौकिक जगत्मा स्वामी एवं सेवकवीच कुनै अन्तर हुँदैन, जसअन्तर्गत उनीहरूबीचको सम्बन्ध लेश मात्र पनि सांसारिक नभई सिद्धावस्थामा स्थापित भएको हुन्छ ।

भौतिक जगत्को स्वभाव नाशवान छ । भगवद्गीताका अनुसार लौकिक एवं अलौकिक जगत्हरूबीच एक आपसमा ठक्कर खाने सम्भावना भयो भने तिनीहरू दुवै नष्ट हुने छन् भन्ने वैज्ञानिकहरूको परिकल्पनामा केही आंशिक सत्यता छ । भौतिक जगत् प्रकृतिका परिवर्तनशील गुणहरूले बनेको हुन्छ । यी गुणहरूलाई क्रमशः सत्त्वगुण, रजोगुण एवं तमोगुण भनिन्छ । यो भौतिक जगत् रजोगुणद्वारा सृष्टि भएको हो, जसलाई सत्त्वगुणद्वारा पालन गरिन्छ र साथै तमोगुणद्वारा संहार गरिन्छ । यी गुणहरू यस भौतिक जगत्मा सर्वव्यापी हुन्छन् । साथै, यहाँ प्रत्येक घण्टा, प्रत्येक मिनेट एवं प्रत्येक सेकेन्ड सृजन, पालन एवं सहारका क्रियाहरू भइरहेका हुन्छन् । यस

भौतिक ब्रह्माण्डको सबैभन्दा उच्चलोक ब्रह्मलोक पनि प्रकृतिका यी तीन गुणहरूद्वारा प्रभावित भइरहेको हुन्छ । यस भौतिक ब्रह्माण्डको सबैभन्दा उच्चलोक ब्रह्मलोक पनि प्रकृतिका तीन गुणहरूद्वारा प्रभावित भएको हुन्छ, तैपनि सत्त्वगुणको प्रधानताका कारण त्यहाँको जीवनावधि ४,३००,००० × १००० × २ × ३० × १२ × १०० सौर्य वर्षको हुन्छ। तर, यतिको लामो जीवनावधि भएता पनि ब्रह्मलोक पनि नष्ट हुन्छ । पृथ्वीलोकको तुलनामा ब्रह्मलोकको जीवनावधि आश्चर्यजनकरूपले लामो भएता पनि त्यो त केवल अलौकिक (आध्यात्मिक) जगत्मा हुने शाश्वत जीवनको सानो झिल्को मात्रै हो । फलस्वरूप, भगवद्गीताका वक्ता भगवान् श्रीकृष्णले त्यही आध्यात्मिक जगत्लाई सङ्केत गर्नुभएको छ, जुन उहाँको धाम हो ।

यस जड जगत्भित्र रहेका सम्पूर्ण लोकलोकान्तरहरू ४३००,००० × १००० × २ × ३० × १२ × १०० सौर्य वर्षको अन्तसँगै नष्ट हुने छन् भन्ने कुरा भगवान् कृष्णले सूचित गर्नुभएको छ। साथै यस भौतिक जगत्को विनाश सँगै यहाँभित्रका सम्पूर्ण लोकहरूमा निवास गर्ने तमाम प्राणीहरू पनि नष्ट हुनेछन् । तर, जीवात्मा भने शाश्वत रूपले एउटा अभौतिक कण हो। जबसम्म उसले आफूलाई आध्यात्मिक क्रियाकलापको अनुशीलनद्वारा आध्यात्मिक जगत्को धरातलसम्म उठाउन सक्दैन, भौतिक जगत्को प्रलयकालमा उसको विनाश हुनेछ र कुनै एउटा नवीन ब्रह्माण्डमा एउटा नवीन जड शरीर धारण गरी उसले अर्को जन्म लिनुपर्नेछ । अर्को शब्दमा भन्नुपर्दा, उसले जन्म मृत्युको चक्रबाट प्राप्त हुने कष्टलाई भोगिरहनुपर्दछ। तर, आफ्नो सम्पूर्ण भौतिक जीवनावधिभरि श्रीभगवान्को प्रेममय सेवा गर्ने जीवात्माहरूलाई भने निःसन्देह

भौतिक शरीरको मृत्युपश्चात् आध्यात्मिकलोक तर्फ पठाइन्छ।" अध्यात्मिक क्रियाकलापको अभ्यासद्वारा भगवद्धाम फर्किएका जीवात्माहरूले मात्रै अमरता प्राप्त गर्न सक्दछन्।

ती आध्यात्मिक क्रियाकलापहरू केके हुन्? तिनीहरू औषधिहरू हुन्। उदाहरणार्थ, जब कुनै मानिस व्याधिग्रस्त हुन्छ, ऊ चिकित्सककहाँ जान्छ, जसले उसलाई औषधि दिन्छन् जुन औषधिले कालान्तरमा व्याधिद्वारा पीडित त्यस व्यक्तिलाई रोगमुक्ति गराइदिन्छ। त्यसैगरी, भौतिक जीवन पनि ब्याधिग्रस्त अवस्था भएका कारण हामीहरू पनि आध्यात्मिक चिकित्सककहाँ जानुपर्दछ। उसको ब्याधि के हो? उसले निरन्तर जन्म, मृत्यु, जरा एवं ब्याधिका कष्टहरूलाई भोगिरहनुपर्दछ। यदि एकपटक मात्रै पनि उसले आफूलाई "भगवद्धाम" उपचार केन्द्रमा भर्ना गर्दछ भने ऊ आफूलाई आध्यात्मिक जगत्मा स्थानान्तरण गर्न योग्य बन्दछ, जहाँ जन्म, मृत्यु, मुक्त शाश्वत जीवन विद्यमान हुन्छ।

साधारणतया दुई किसिमले भौतिक जगत्को प्रलय हुन्छ। तिनीहरू क्रमशः आंशिक र पूर्ण प्रलय हुन्। भौतिक जगत सर्वोच्च स्थान ब्रह्मलोक मा ४,३००,०००×१००० सौर्य वर्ष बराबर ब्रह्मको एक दिन हुन्छ। त्यति नै अवधि रात्री हुन्छ। रात्रीमा प्रलय हुन्छ जसलाई आंशिक प्रलय भनिन्छ। आंशिक प्रलयकालयमा त्यो सर्वोच्च ब्रह्मलोक नष्ट हुदैन, तर आंशिक प्रलय प्रत्येक ४३००, ००० × १००० × २ × ३० × १२ × १०० सौर्य वर्षको अन्तमा सम्पूर्ण प्रलय हुन्छ, जसअन्तर्गत सम्पूर्ण सृष्टि त्यही आ( ध्यात्मिक शरीरभित्र विलिन हुन पुग्दछन्, जहाँबाट भौतिक तत्त्वको उद्भव एवं सृष्टि भएकोहुन्छ। जड आकाशभन्दा धेरै पर रहेको आ( ध्यात्मिक आकाश कहिल्यै अन्त हुँदैन र त्यसै आध्यात्मिक आकाशले

नै जड जगत्लाई समाहित गर्दछ । भौतिक एवं आध्यात्मिक जगत्बीच "टक्कर" भएर ती दुवै जगत् नष्ट हुनेछन् भन्ने वैज्ञानिकहरूको मत सही हुन सक्दछ तर आध्यात्मिक जगतको भने अन्त्य हुँदैन । "शाश्वतरूपले अस्तित्ववान् आध्यात्मिक जगत् भौतिककवादी वैज्ञनिकलाई अज्ञात नै रहेको छ । तिनीहरूलाई त केवल यो जगत्को अस्तित्व सम्बन्धी मतहरू त भौतिक जगत्का गुणहरूसँग विरोधी हुन्छन् भन्ने कुराको मात्र ज्ञान हुन्छ ।" आध्यात्मिक ब्रह्माण्डको बारेमा विस्तृत जानकारी त केवल स्वरूपसिद्ध अधिकारीहरूका अमोघ स्रोतहरूद्वारा मात्रै प्राप्त गर्न सकिन्छ, जसले सावधानीपूर्वक आध्यात्मिक तत्त्वको संरचनालाई बुझेको हुन्छन् । यो जानकारी त परमपुरुष भगवान्का एकजना आज्ञाकारी शिष्यसँग श्रवण गर्नाले प्राप्त गर्न सकिन्छ ।

यसरी सर्वप्रथम वैदिक ज्ञान ब्रह्माजीको हृदयमा प्रदान गरिएको थियो, जो यस जड जगत्का प्रधान जीवात्मा हुनुहुन्छ । यही ज्ञान ब्रह्माजीले नारद मुनिलाई प्रदान गर्नुभएको थियो । त्यसैगरी, भगवद्गीताको ज्ञान भगवान् कृष्णद्वारा सूर्यलोकका अधिष्ठाता देवता विवस्वान्लाई प्रदान गरिएको थियो, तर जब गुरुशिष्यको श्रव्य परम्परा नष्ट हुनपुग्यो भगवान् कृष्णले कुरुक्षेत्रको युद्ध मैदानमा भगवद्गीतालाई पुनर्वाचन गर्नुभएको थियो । त्यस समय भगवान् श्रीकृष्णबाट उक्त दिव्य ज्ञान प्राप्त गर्नका लागि अर्जुनले एकजना शिष्यको भूमिका निर्वाह गरिरहेका थिए । स्थूल भौतिकवादीहरूसँग हुने सम्पूर्ण संशय निर्मूल गर्नका लागि अर्जुनले श्रीभगवान्सँग आवश्यक सम्पूर्ण जिज्ञासाहरू गरेका थिए र भगवान्द्वारा ती सम्पूर्ण जिज्ञासहरूलाई समाधान गरिएको थियो । जसलाई जोसुकै साधारण मानिसले पनि बुझ्न सक्दछन् । केवल भौतिक संसारको

तडकभडकमा आकर्षित भएका मानिसहरूले मात्र भगवान् कृष्णलाई आधिकारिक रूपले स्वीकार गर्दैनन् । "आध्यात्मिक जगत्को ज्ञान प्राप्त गर्नुभन्दा पहिले मनिसले क्रमशः तन, मन एवं वचनले शुद्ध बन्नुपर्दछ ।" भक्तियोग नै दुवै नव आगन्तुक एवं सिद्ध योगीद्वारा अभ्यास गर्न सकिने पूर्ण वैज्ञानिक दिव्य कर्म हो ।

यो भौतिक जगत् त केवल आध्यात्मिक जगत्को प्रतिविम्ब मात्रै हो र आफ्नो हृदय एवं आचरणमा शुद्ध भएका मानिसहरूले साररूपमा नै भगवद्गीताका श्लोकहरूबाट आध्यात्मिक जगत्को बारेमा सम्पूर्ण जानकारी प्राप्त गर्न सक्दछन् । वास्तवमा यी जानकारीहरू भौतिक जानकारीहरूभन्दा पनि अत्यधिक सविस्तार हुन्छन् । यसका आधारभूत जानकारीहरू निम्नलिखित छन् :

आध्यात्मिक जगत्का अधिष्ठाता देवता भगवान् कृष्ण हुनुहुन्छ, जो आफ्नो आदि पुरुष स्वरूपमा मात्र नभई आफ्ना अनेकौं अंश विस्तारहरूका साथ त्यहाँ निवास गर्नुहुन्छ । यी व्यक्तित्वहरूलाई एवं उहाँका अंश विस्तारहरूलाई त केवल भक्तियोग अथवा भक्तिमय सेवाका अलौकिक कार्यहरूद्वारा मात्रै जान्न सकिन्छ । परमपुरुष तत्त्व हुनुहुन्छ । भौतिकलगायत आध्यात्मिक तत्त्वहरू त उहाँबाटै उत्पन्न हुन्छन् । उहाँ नै एउटा परिपूर्ण वृक्षको मूल हुनुहुन्छ । जब वृक्षको मूलमा जल सिञ्चन गरिन्छ, स्वतः त्यसबाट वृक्षका हाँगाविँगा एवं पातहरू पोषित हुन्छन् । त्यसैगरी जब भगवान् श्रीकृष्णको आराधना गरिन्छ, भौतिक जगत्का सम्पूर्ण ज्ञानहरू प्रकाशित भइहाल्दन्छन् र भौतिकवादी कार्यालयहरूमा संलग्न नभए तापनि भक्तको हृदय पुष्ट हुन पुग्दछ, यही नै भगवद्गीताको रहस्य हो ।

आध्यात्मिक जगत्भित्र प्रवेश गर्ने विधि भौतिकवादी विधिभन्दा भिन्नै किसिमको हुन्छ । यस जड जगत्मै रहेर आध्यात्मिक

क्रियाकलापहरूको अनुशीलनद्वारा व्यष्टि जीवात्माहरू सजिलै आध्यात्मिक जगत्‌भित्र प्रवेश गर्न सक्दछन्। तर, जो नितान्त स्थूल भौतिकवादी छन्, र सीमित अनुसन्धानमूलक विचारको बलमा मानसिक परिकल्पना एवं भौतिकवादी विज्ञानमा विश्वास गर्दछन्, तिनीहरूले भने आध्यात्मिक लोकभित्र प्रवेश गर्न ठूलो कठिनाइको सामना गर्दछन। स्थूल भौतिकवादीहरूले अन्तरिक्षयान भू-उपग्रह एवं रकेट लगायतका साधनहरूको मद्दतद्वारा आध्यात्मिक लोकतर्फ जाने प्रयास गर्न सक्दछन् जसलाई तिनीहरूले पृथ्वीभन्दा बाहिरको अन्तरिक्षमा प्रक्षेपण गरेका हुन्छन्। तर, यस्तो विधिद्वारा तिनीहरूले यस भौतिक आकाशभित्र रहेका उच्चतर लोकहरूलाई त प्राप्त गर्न सक्दैनन् भने ती लोकहरूको बारेमा के कुरा गर्नु जो भौतिक ब्रह्माण्ड भन्दा धेरै पर छन्। पूर्णरूपले यौगिक शक्तिहरूमाथि स्वामित्व कायम गर्न सकेमा पनि योगीहरूले आध्यात्मिक लोकभित्र प्रवेश गर्न ठूलो कठिनाई को सामना गर्नुपर्दछ। ती ध्यान योगीहरूले यौगिक शक्तिको मद्दतद्वारा आफ्नो जड शरीरभित्र रहेको आध्यात्मिक कण (आत्मा) लाई नियन्त्रण गरी उचित समयमा स्वेच्छापूर्वक आफ्नो शरीर त्याग गर्न सक्दछन। यसरी, तिनीहरू भौतिक एवं आध्यात्मिक जगत्‌लाई जोड्ने विशेष किसिमको मार्गबाट आध्यात्मिक जगत्‌भित्र प्रवेश गर्न सक्दछन्। यदि कुनै किसिमले तिनीहरू यो कार्य गर्न सक्दछन् भने, तिनीहरूले भगवद्‌गीतामा निर्दिष्ट विधिको पालना गर्नुपर्दछ।

> जसले दिव्यताको अनुभव गरेका छन्, तिनीहरू सूर्य उत्तरायण भएको समयमा शरीर त्याग गर्दै आध्यात्मिक लोकमा प्रवेश गर्न सक्दछन। यो समय भनेको सूर्य उत्तर दिशातर्फ अवस्थित हुनु हो, अथवा अग्निदेव एवं उज्यालो प्रकाशद्वाराको वातावरण अच्छादित हुनु हो।

विभिन्न देवीदेवताहरू एवं शक्तिशाली कार्यकारी पदाधिकारीहरू यस ब्रह्माण्डमा विविध प्रशासनिक क्रियाकलापहरू सम्पन्न गर्नका लागि नियुक्त गरिएका हुन्छन् । ब्रह्माण्डीय व्यवस्थाका यी जटिलताहरूलाई देख्न असक्षम मूर्ख मानिसहरू छन् जो देवीदेवताहरूद्वारा अग्नि, वायु, विद्युत्, दिन, रात लगायतका तत्त्वहरू सञ्चालित हुन्छन् भन्ने कुरा माथि व्यङ्ग्य गर्दछन् । तर, एउटा सिद्ध योगीलाई भने भौतिक कारोबारका यी प्रशासकहरूलाई कसरी सन्तुलित राख्न सकिन्छ भन्ने कुराको ज्ञान हुन्छ । साथै, उसले यी प्रशासकहरूसँग हुने सद्भावनाको लाभ उठाउँदै स्वेच्छापूर्वक अलौकिक जगत् अथवा जड जगत्भित्रको सर्वोच्च लोक भित्र प्रवेश गर्न योजित शुभ अवसरमा आफ्नो भौतिक शरीरलाई परित्याग गरिदिन्छ । यस जड- जगत्को सर्वोच्च लोकमा योगीहरूले सयौं हजारौं वर्षसम्मका लागि यहाँको भन्दा पनि अझै सुखद् एवं सुविधासम्पन्न जीवनको भोग गर्न सक्दछन् । तर, यी उच्चलोकहरूमा पनि जीवन शाश्वत हुँदैन । जो मानिसहरू शाश्वत जीवन चाहन्छन्, तिनीहरू ब्रह्माण्डीय कारोबारका दैवी प्रशासकहरूद्वारा निर्धारित निश्चित शुभक्षणमा आफ्नो यौगिक शक्तिको मद्दतद्वारा आध्यात्मिक ब्रह्माण्डमा प्रवेश गर्दछन् । यी प्रशासकहरू सातौं दर्जाको लोक मानिने "पृथ्वी" लोकका स्थूल मानिसहरूकालागि अदृश्य हुन्छन् ।

जो मानिसहरू योगी होइनन् तर यज्ञ, दान एवं तपस्या लगायतका पुण्य कर्महरू सम्पन्न गरी कुनै एउटा शुभक्षणमा मर्दछन्, मृत्युपश्चात् तिनीहरूले आफूलाई उच्चलोकतर्फ उत्थान गर्न सक्दछन् । यति हुँदाहुँदै पनि तिनीहरू पुनः यही पृथ्वीलोकमा नै आउनुपर्दछ ।

तिनीहरूको प्रयाण (मृत्यु) धूर्म (अन्धकार), औंसी एवं सूर्य दक्षिणायन भएको समयमा हुन्छ ।

संक्षेपमा भन्नुपर्दा, यदि कुनै मानिस आध्यात्मिक जगत्‌भित्र प्रवेश गर्न चाहन्छ भने उसले भगवान् कृष्णको भक्तिमय सेवा अथवा आध्यात्मिक क्रियाकलापहरूका विधिहरूलाई अपनाउन सक्दछ भन्ने कुराको निर्देशन भगवद्‌गीतामा दिइएको छ । जुन मानिसले दक्ष अध्यात्मवादीहरूद्वारा प्रदत्त भक्तिमय सेवाको विधिलाई अपनाउँदछ ऊ आध्यात्मिक जगत्‌भित्र प्रवेश गर्ने आफ्नो प्रयासमा कहिल्यै असफल हुँदैन । यस कार्यमा अनेकौं अड्‌चनहरू आउने भएता पनि भगवान् कृष्णका भक्तहरूले शुद्ध भक्तहरूद्वारा निर्दिष्ट मार्गलाई कठोरतापूर्वक पालना गरी ती अड्‌चनहरूमाथि विजय प्राप्त गर्न सक्दछन् । त्यस्ता भक्तहरू भगवान्‌को आध्यात्मिक राज्यतर्फको यात्रा गर्न अगाडि बढिरहेका यात्रीहरू भएका कारण तिनीहरू कहिल्यै विचलित हुँदैनन् । आध्यात्मिक ब्रह्माण्डभित्र प्रवेश गर्नका लागि यदि मानिसहरूले यो निश्चित मार्गलाई अपनाउँदछन् भने तिनीहरू कोही पनि ठगिने एवं हतोत्साहित हुने छैनन् । केवल भक्तियोगलाई एकतर्फी ढङ्गले सम्पन्न गर्नाले मात्र पनि मानिसले सजिलैसित वेदाध्यन गरेको, यज्ञ सम्पन्न गरेको तपस्या गरेको र दानादि कार्यहरू सम्पन्न गरेर प्राप्त गरिने सम्पूर्ण फलहरू प्राप्त गर्न सक्दछ ।

अत: सबैका लागि भक्तियोग नै सबैभन्दा श्रेष्ठ तपस्या हो । त्यसमा पनि यस लौह युगमा त झन यसलाई सरल बनाइएको छ । स्वयं भगवान् श्रीकृष्णद्वारा श्री चैतन्य महाप्रभुका रूपमा आफ्नो सर्वोत्तम उदार एवं दानवीर अवतारद्वारा यसलाई सरल बनाइएको हो छ जो भगवन्नामको संकीर्तनमा नृत्य गर्दै सम्पूर्ण भारतवर्षभरि संकीर्तन आन्दोलनको प्रचार गर्नका लागि (इ.स. १४८६ - १५३४)

पश्चिम बंगालको नदिया जिल्लामा अवतरित हुनुभएको थियो। भगवान् चैतन्य महाप्रभुको कृपाद्वारा मानिसले अति शीघ्र भक्तियोगलाई अपनाउन सक्दछन्। यसरी, उसको हृदयभित्र रहेका सम्पूर्ण अनर्थहरू नष्ट हुन्छन्। भक्तियोगको साहायताद्वारा मानिसको भौतिक कष्टरूपी दावाग्नि निभ्न पुग्दछ र उभित्र दिव्यानन्द प्रवेश गर्दछ।

ब्रह्मसंहिताको पञ्चम अध्यायमा यस भौतिक जगत्भित्र रहेका विविध लोकलोकान्तरहरूको व्याख्या गरिएको छ। यस भौतिक जगत्मा विविध लोकलोकान्तरहरूसहित सैयौं हजारौं ब्रह्माण्डहरू छन्। यदि यी सम्पूर्ण ब्रह्माण्डहरूलाई एकै ठाउँमा मिलाउने हो भने त्यो केवल भगवान्को सम्पूर्ण सृष्टिको एक चौथाइ मात्र हुन्छ। भगवान्को सृष्टिको ठूलो हिस्सा (तीन-चौथाइ) भने आध्यात्मिक आकाशमा नै विद्यमान छ, जसलाई परव्योम अथवा वैकुण्ठ लोक भनिन्छ। ब्रह्मसंहिता एवं भगवद्गीताका यी जानकारीहरूलाई अन्ततः भौतिकवादी वैज्ञानिकले अलौकिक जगत्को अस्तित्वसम्बन्धी आफूले गरेको अनुसन्धानद्वारा पुष्टि गर्न सक्ने छन् होला।

यसका अतिरिक्त, फेब्रुअरी २१, १९६० रूसी, पत्रिकामा यस्तो समाचार प्रकाशित भएको थियो:

> रूसका एकजना प्रख्यात अन्तरिक्ष वैज्ञानिक प्राध्यापक श्रीमान बोरिस बर्नोत्सव वेलियमिनोभले यस ब्रह्माण्डभित्र अनेकौं विवेकशील प्राणिहरू निवास गर्ने असङ्ख्य लोकलोकान्तरहरू हुन सक्दछन् भन्ने कुरा पत्ता लगाए छन्।

ती रूसी अन्तरिक्षयात्रीद्वारा व्यक्त उक्त भनाइ ब्रह्मसंहिता (५.४०) मा दिइएको यस जानकारीद्वारा पुष्टि हुन्छ।

**यस्य प्रभा प्रभवतो जगदण्डकोटि**
**कोटिष्वशेषवसुधादि विभूतिभिन्नम् ।**
**तद् ब्रह्म निष्कलमनन्तमशेषभूतं**
**गोविन्दमादिपुरुषं तमहं भजामि ।**

ब्रह्मसंहिताको यो उद्धरणका अनुसार यस ब्रह्माण्डमा असंख्य लोकलोकान्तरहरू छन् । यस ब्रह्माण्डभित्र असङ्ख्य लोकलोकान्तरहरू छन् भनेर ती रूसी वैज्ञानिकहरूद्वारा दिइएको प्रमाण मात्र नभएर ब्रह्म संहिताको उद्धरणअनुसार यस भौतिक जगत्मा असङ्ख्य ब्रह्माण्डहरू आआफ्ना लोकलोकान्तरहरूका साथ भगवान् महाविष्णुको दिव्य शरीरबाट उद्भव ब्रह्मतेजमा तैरिरहेका हुन्छन् । भगवान् महाविष्णुलाई हामी निवास गरिरहेको यस ब्रह्माण्डका आधिष्ठाता देवता ब्रह्माजीले पूजा गर्दछन् ।

ती रूसी अन्तरिक्ष यात्रीले के कुरा पनि पुष्टि गरेका छन् भने यस ब्रह्माण्डभित्र कमसेकम अनुमानित १० करोड लोकलोकान्तरहरू छन् । ब्रह्मसंहितामा ती प्रत्येक विविध असङ्ख्य ब्रह्माण्डहरूभित्र विविध असङ्ख्य लोकलोकान्तरहरू रहेका छन् भन्ने कुरालाई सूचित गरिएको छ ।

ती अन्तरिक्षयात्रीको विचारलाई प्राध्यापक भ्लादिमिर अल्पाटोभ नाम गरेको अर्को एकजना जीवशास्त्रीले अगाडि बढाएका थिए, जसको भनाइअनुसार माथि उल्लेख गरिएका केही लोकहरू पृथ्वीलोक जत्तिकै विकसित छन् । मस्कोबाट प्राप्त भएको उक्त जानकारीमा यस्तो वर्णन छ ।

यस्ता ग्रहहरू पृथ्वीको जस्तै जनजीवनद्वारा समृद्ध भएका हुन्छन् । रसायन शास्त्री डा. निकोलिया झिरोभ ती

लोकहरूको वायुमण्डलमा हुने समस्यालाई औंल्याउँदै एउटा उदाहरणद्वारा मंगल ग्रहका प्राणीहरू सामान्यतया शरीरभित्र निम्न ताप हुँदा पनि सजिलैसँग जीवित रहन सक्दछन् भन्ने कुरा व्यक्त गर्नुहुन्छ। उहाँ भन्नुहुन्छ– मंगल, ग्रहको वायुमण्डलमा व्याप्त वायुहरूको संयोजनले त्यहाँको वातावरणमा अनुकूल हुने प्राणीहरूको जीवनलाई धान्न सक्दछ।

ब्रह्मसंहिता भित्र **"विभूति भिन्नम्"** भन्ने शब्दद्वारा विविध लोकलोकान्तरहरूभित्र हुने प्राणीहरूको अनुकूलनीयतालाई व्याख्या गरिएको छ। जहाँ भनिएको छ :– यस ब्रह्माण्डभित्र रहेका असंख्य लोकलोकान्तरहरू कुनै विशेष किसिमको वायुमण्डलद्वारा निर्मित हन्छन् र त्यहाँ रहेका जीवात्माहरू त्यहाँको उच्चतर एवं निम्नतर वातावरण अनुसार विज्ञान एवं मनोविज्ञान लगायतका क्षेत्रहरूमा अगाडि बढेका हुन्छन्। विभूति भनेको "विशेष शक्ति" हो र भिन्नम् भनेको "विविधता" हो। प्रविधिको माध्यमद्वारा अन्य ग्रहहरूतर्फ अगाडि बढिरहेका वैज्ञानिकहरूले पृथ्वीलोकको वायुमण्डलभित्र जीवनयापन गर्न सक्ने प्राणीहरू अन्य ग्रहहरूका वायुमण्डलभित्र जीवनयापन गर्न सक्दैनन् भन्ने कुरा जान्नुपर्दछ। उदाहरणार्थ, सूर्यग्रह, मंगलग्रह एवं चन्द्रग्रहजस्ता ग्रहहरूभित्र प्रवेश गर्नका लागि मानिसले गरिरहेको प्रयास पूर्ण असफल हुनेछ किनकि ती ग्रहहरूभित्र पृथ्वीको भन्दा भिन्नै वतावरण हुन्छ। तर, मानिस व्यक्तिगत प्रयासद्वारा आफूले चाहेको लोकमा जान सक्दछ। तर, यो कार्य केवल मनभित्र हुने मनोवैज्ञानिक परिवर्तनद्वारा सम्भव हुन्छ। मन जड शरीरको केन्द्रविन्दु हो। शरीरको आनुक्रमिक विकास, हुने मनोवैज्ञानिक परिवर्तनमा निर्भर गर्दछ। किरा (लाभ्राको) शरीरिक

संरचना पुतलीको शरीरमा परिणत हुनु एवं आधुनिक चिकित्सा विज्ञानअनुसार पुरुषको शरीरलाई स्त्रीको शरीरमा बदल्नु अथवा स्त्रीको शरीरलाई पुरुषको शरीरमा बदल्नु जस्ता परिवर्तनहरू धेरै-थोरै मनोवैज्ञानिक परिवर्तनहरूमा निर्भर गर्दछन् ।

भगवद्गीतामा भनिएको छ– यदि कुनै मानिसले आफ्नो मनलाई भगवान् श्रीकृष्णको चिन्तनमा लगाउँदै शरीर त्यागदछ भने ऊ तत्काल अलौकिक जगत्भित्र रहेको आध्यात्मिक संसारभित्र प्रवेश गर्न सक्दछ। भन्नुको तात्पर्य के हो भने जो सुकैले पनि यदि भक्तिका निर्धारित विधिनियमहरूको पालना गर्दछ भने उसले आफ्नो मनलाई पदार्थबाट परमपुरुष भगवान्को स्वरूपतर्फ मोड्नका लागि प्रशिक्षण दिन सक्दछ, जसद्वारा उसले अलौकिक आकाशभित्र रहेको भगवद्धाम प्राप्त गर्न सक्दछ। यो कुरामा कुनै सक्देह छैन।

त्यसैगरी, यदि कुनै मानिस आफ्नो वर्तमान शरीरलाई परित्याग गरी जड आकाशभित्र रहेका लोकलोकान्तरहरूभित्र प्रवेश गर्न चाहन्छ भने ऊ मृत्युपश्चात त्यहाँ जान सक्दछ। यसरी यदि कुनै मानिस चन्द्रग्रह, सूर्यग्रह, अथवा मंगलग्रहमा जान चाहन्छ भने ऊ केवल त्यहि उद्देश्यका लागि निर्धारित विधिहरूद्वारा त्यहाँ जान सक्दछ। यस कथनलाई भगवद्गीतामा यसरी पुष्टि गरिएको छ :

मृत्युकालमा मानिसले जुनजुन वस्तुको चिन्तन गर्दछ,
मृत्युपश्चात् उसले त्यही वस्तु प्राप्त गर्दछ।

महाराज भरतले आफ्नो कठोर तपस्या गरेता पनि मृत्युकालमा एउटा हरिणलाई स्मरण गर्नुभएको थियो र त्यही कारणले गर्दा उहाँ पछिल्लो जन्ममा हरिण भएर जन्मिनुभएको थियो। तर, उहाँले स्पष्टरूपमा आफ्नो पूर्वजन्म एवं आफूद्वारा त्यस जन्ममा गरिएका त्रुटिहरूलाई स्मरण गर्न सक्नुभएको थियो। "मानिसले के कुरा बुझ्नु

आवश्यक छ भने मृत्युकालमा मानिसको चेतना उसले जीवनभर गरेका क्रियाकलापहरूद्वारा प्रभावित हुन्छ।"

श्रीमद्भागवत (तृतीय स्कन्ध, अध्याय ३२) मा चन्द्रलोकभित्र प्रवेश गर्ने विधिलाई तल वर्णन गरिएको छ :

भौतिकवादी मानसिकताले युक्त मानिस जसलाई भगवद्धामको बारेमा केही जानकारी छैन, केवल मान प्रतिष्ठा एवं धन सम्पत्ति लगायतका भौतिक उपलब्धिहरूका पछाडी पागल भइरहन्छ। यस्ता मानिसहरू आफ्नै स्वार्थपूर्तिका लागि आफ्ना परिवारविशेषको प्रगतीशील हितका लागि लालायित हुन्छन् । यी मानिसहरूले सांसारिक क्रियाकलापहरूद्वारा आफ्ना इच्छित वस्तुहरूलाई प्राप्त गर्न सक्दछन् । तिनीहरू कृत्रिमरूपले कर्मकाण्डीय पद्धतिद्वारा आफ्ना निर्धारित कर्महरूलाई सम्पन्न गर्ने कार्यमा संलग्न हुन्छन् र तदनुसार प्रामाणिक शास्त्रहरूद्वारा निर्देशित यज्ञहरूको सम्पादन गरी देवीदेवताहरूलाई अधीनस्थ गर्न एवं आफ्ना पितृहरूलाई सन्तुष्ट गर्न झुकाव राख्दछन् । यस्ता यज्ञ-यज्ञादि एवं संस्कार क्रियाहरूद्वारा वशिभूत भएका जीवात्माहरू मृत्युपश्चात चन्द्रलोकमा प्रवेश गर्दछन्। जब मानिस चन्द्रलोक जान्छ, उसले सोमरस नामले एउटा प्रसिद्ध स्वर्गीय पेयपदार्थ सेवन गर्ने योग्यता प्राप्त गर्दछ। 'चन्द्रलोक' एउटा यस्तो स्थान हो, जहाँका अधिष्ठाता देवता चन्द्रदेव हुनुहुन्छ। त्यहाँको वातावरण एवं जीवनको सुखसुविधा यस पृथ्वीलोकमा पाईने वातावरण एवं सुखसुविधा भन्दा कैयौं गुणा उत्तम एवं सुविधासम्पन्न हुन्छ। चन्द्रलोकमा पुगेपश्चात् यदि त्यो आत्माले आफूलाई उच्चलोक तर्फ उठाउनको लागि प्राप्त अवसरको लाभ उठाउँदैन भने, ऊ पुनः पृथ्वीलोक अथवा पृथ्वीलोक जस्ता लोकहरूमा झर्दछ । तर,

यदि भौतिकवादी व्यक्तिले सर्वोच्च लाभ प्राप्त गरेता पनि निःसन्देह सृष्टिको प्रलयकालमा ऊ नष्ट हुनेछ।

जहाँसम्म अलौकिक जगत्भित्रका लोकलोकान्तरहरूको प्रश्न छ, तिनीहरू परव्योमभित्र असङ्ख्य वैकुण्ठलोकहरू हुन्छन्। वैकुण्ठ जगत् आध्यात्मिक लोकहरू हुन् जुन श्रीभगवान्को अन्तरङ्ग शक्तिका सृष्टि हुन् र यी लोकहरू भौतिक लोकहरूको अनुपातमा तीन चौथाइ रहेका हुन्छन्। अतः अभागी सांसारिक मानिसहरू त्यस्तो लोकमा राजनैतिक समन्वय ल्याउन उद्यमशील छन् जुन ईश्वरका सृष्टिहरूमध्येको सबैभन्दा सानो सृष्टि हो। पृथ्वीलोकको मात्र के कुरा गर्नु अन्तरिक्षमा रहेका असङ्ख्य लोकलोकान्तरहरूले भरिभराऊ यस ब्रह्माण्डलाई पनि तोरिका दानाले भरिभराऊ झोलाभित्रको एउटा तोरीको दानासँग तुलना गरिएको छ। तर, दुर्भागी भौतिकवादी व्यक्तिहरू यहाँ सुखपूर्वक रहिरहने योजना निर्माण गर्दछन् र त्यस्ता कार्यहरूमा आफ्नो पूरुषार्थ नष्ट गर्दछन् जुन अन्तत निरर्थक हुने छन्। वस्तुतः मानिसले आफ्नो अमूल्य समयलाई अड्कलबाजी त्रि(ऽयाकलापहरूमा व्यस्त गराउनु भन्दा पनि सरल एवं अनुकूल आ(ध्यात्मिक विचारहरूले युक्त जीवनको खोजी गर्ने कार्यमा लगाउने हो भने उसले आफूलाई असिमित सांसारिक व्याकुलताहरूबाट उद्धार गर्न सक्दछ।

सांसारिक सुखको पराकाष्ठालाई प्राप्त गर्ने चाहना भएको भौति(कवादी व्यक्तिले पनि आफूलाई त्यस्तो लोकमा पुऱ्याउन सक्दछ जहाँ, उसले पृथ्वीलोकमा उपलब्ध सुख-सुविधा भन्दा पनि कैयौं गुणा सुखसुविधाको उपभोग गर्न सक्दछ। तर, शरीर त्याग गर्नेबित्तिकै आध्यात्मिक जगत् फर्किने तयारी गर्नु चाहिँ सर्वश्रेष्ठ योजना हो। तैपनि यदि कुनै मानिस सांसारिक सुखभोगतर्फ प्रवृत्त छ भने, उसले

आफूलाई यौगिक शक्तिको प्रयोगद्वारा यही भौतिक आकाश भित्र रहेका अन्य लोकहरूतर्फ स्थानातरण गर्न सक्दछ । अन्तरिक्षयात्रीहरूले प्रयोग गर्ने खेलौना, अन्तरिक्षहरू यानहरू त केवल बालकहरूले गर्ने मनोरञ्जनजस्ता हुन् र यो कार्यका लागि तिनीहरूको केही प्रयोजन छैन ।

अष्टाङ्ग योग प्रणाली पनि भौतिकवादी योग प्रणाली नै हो, किनकि यसले बढीमा मानिसलाई आफ्नो भौतिक शरीरभित्र वायुको चाललाई नियन्त्रण गर्न सिकाउँदछ । शरीरभित्र रहने प्राणवायुमा आध्यात्मिक स्फूलिङ्ग, 'आत्मा' तैरिएर बसेको हुन्छ । श्वासप्रश्वास नै त्यो वायुको तरङ्ग हो, जसले आत्मालाई नियंत्रण गरेको हुन्छ । अतः योगविधि प्राणवायुलाई मूलधार चक्रबाट मणिपूर चक्रसम्म, मणिपुरदेखि अनाहत, अनाहत देखि विशुद्धि, विशुद्धि देखि आज्ञा, आज्ञादेखि संहस्रार चक्रसम्म र अन्ततः सहस्रार चक्रबाट आफूले चाहेको लोकसम्म पुऱ्याउनका लागि प्राणवायुलाई नियन्त्रण गर्ने एउटा भौतिक कला हो । एउटा भौतिक वैज्ञानिकलाई वायु एवं प्रकाशको गति कति हुन्छ भन्ने कुराको ज्ञान हुन्छ तर उसलाई मन एवं वुद्धिको गति कति हुन्छ भन्ने कुराको ज्ञान हुँदैन । हामीहरूसँग मनको गतिका बारेमा केही सीमीत अनुभव छ, किनकि केही क्षणमै हामीहरूले आफ्नो मनलाई हजारौं माइल पर रहेका स्थानहरूसम्म पुऱ्याउन सक्दछौं । बुद्धि त झन मनभन्दा पनि सूक्ष्म हुन्छ । तर, आत्मा बुद्धिभन्दा पनि सूक्ष्म हुन्छ । आत्मा मन एवं बुद्धि जस्तो भौतिक तत्त्व नभएर अभौतिक तत्त्व हो । आत्मा बुद्धिभन्दा पनि हजारौं गुणा सूक्ष्म एवं शक्तिशाली हुन्छ । यसरी, हामीहरूले त केवल आत्माले एउटा लोकदेखि अर्को लोकसम्म भ्रमण गर्ने क्रममा तय गर्ने गतिको कल्पना गर्न सक्दछौं । आत्मा कुनै किसिमका भौतिक

साधनहरूको साहायताविना आफ्नै शक्तिद्वारा भ्रमण गर्न सक्दछ। यो कुराको वर्णन गरिरहनुपर्ने आवश्यकता पनि छैन।

आहार, निद्रा, भय एवं इन्द्रियभोगजस्ता पाशविक सभ्यताले आधुनिक मानव समाजलाई ऊ भित्र कतिसम्म शक्तिशाली जीवात्माले निवास गरिरहेको छ भन्ने कुराको विस्मरण गराइदिएको छ र यसरी, मानव समाज पथभ्रष्ट भइरहेको छ। आत्मा सूर्य, चन्द्र एवं विद्युतभन्दा पनि कैयौं गुणा प्रदीप्तवान्, जाज्वल्यमान् एवं शक्तिशाली छ भन्ने कुरा हामीहरूले पहिल्यै वर्णन गरिसकेका छौं। वास्तवमा जबसम्म मानिसले आत्मसाक्षात्कार गर्दैन, तबसम्म उसको जीवन व्यर्थ हुन्छ। अतः भगवान् चैतन्य महाप्रभु आफ्ना शिष्य नित्यानन्द प्रभुका साथ मानव जातिलाई यस्तै पथभ्रष्ट सभ्यताबाट उद्धार गर्नका लागि यस धर्तीमा अवतरित हुनुभएको थियो।

श्रीमद्भागवतमा पनि योगीहरूले कसरी यस ब्रह्माण्डभित्र रहेका सम्पूर्ण लोकलोकान्तरहरूको भ्रमण गर्न सक्दछन् भन्ने कुरा व्याख्या गरिएको छ। जब प्राण शक्तिलाई सहस्रार चक्र (तालु) सम्म उठाइन्छ, त्यहाँ यो प्राणशक्ति आँखा, नाक, एवं कान लगायतका अंगहरूबाट उम्कन सक्ने प्रचुर सम्भावना हुन्छ, किनकि यी स्थानहरूलाई प्राणशक्तिको सातौं कक्ष भनिन्छ। तर, योगीहरूले भने यी छिद्रहरूलाई वायुको पूर्ण निलम्बनद्वारा अवरूद्ध गर्न सक्दछन्। योगीहरूले आफ्नो प्राणशक्तिलाई शरीरको मध्य भाग, भृकुटीमा स्थित गर्न सक्दछन्। यस्तो स्थितिमा उक्त योगीले त्यस्तो लोकको चिन्तन गर्न सक्दछ जहाँ ऊ आफ्नो शरीर छोडेर जान चाहन्छ। त्यसपछि उसले दिव्य वैकुठ जगत्भित्र रहेको कृष्णलोकमा जाने अथवा नजाने भन्ने कुराको निर्णय गर्न सक्दछ, जहाँ पुगिसकेपछि उसलाई पुनः यस भौतिक जगत्मा फर्किरहनुपर्ने अथवा यसै भौतिक ब्रह्माण्डभित्र रहेका उच्चलोकहरूको

भ्रमण गरिरहनुपर्ने आवश्यकता पर्दैन । केवल मुक्तावस्थाका सिद्धयोगीले मात्र यी मध्ये कुनै एउटा कार्य गर्न सक्दछ ।

आफूलाई एउटा लोकदेखि अर्को लोकसम्म भ्रमण गराउँदै पूर्ण चेतनामा अवस्थित भएर आफ्नो शरीर त्याग गर्ने विधिमा सफलता प्राप्त गरेका सिद्ध योगीहरूका लागि त यो कार्य एउटा साधारण मानिसले किराना पसलको भ्रमण गरे जत्तिकै सरल हुन्छ । जड शरीर त आत्माको आवरण मात्रै हो भनेर हामीले पहिले नै चर्चा गरिसकेका छौं । मन एवं बुद्धि आत्माको भित्री पोसाक (सर्ट) हो भने पृथ्वी, जल, वायुलगायतका तत्त्वहरूद्वारा निर्मित स्थूल शरीर बाहिरी आवरण (कोट) हो । यसरी योगविधिद्वारा आफ्नो आत्मसाक्षात्कार गर्न सक्षम एवं पदार्थ र आत्माबीचको भेदलाई जान्न सक्ने जुनसुकै स्वरूपसिद्ध व्यक्तिले पनि आफूले चाहना गरेअनुसारको सिद्धावस्थाका लागि आत्माको स्थूल पहिरनलाई परित्याग गर्न सक्दछ । भगवद्कृपाका कारण हामीहरूसँग पूर्ण स्वतन्त्रता छ । भगवान् हामीहरूप्रति अत्यन्त दयालु हुनुभएका कारण हामीहरू आध्यात्मिक आकाश, भौतिक आकाश अथवा आफूले चाहेको जुनसुकै लोकमा पनि निवास गर्न सक्दछौं । तर, यही स्वतन्त्रताको दुरूपयोग गर्नाले मानिस यस भौतिक जगत्मै पतत हुन्छ र उसले यहाँ बद्ध जीवनका त्रितापहरू भोगिरहनु पर्दछ । आफ्नै छनौटका कारण आत्माले यस भौतिक जगत्मा भोग्ने कष्टपूर्ण जीवनका बारेमा मिल्टनद्वारा "प्याराडाइज लस्ट" भन्ने पुस्तकमा अत्यन्त सुन्दर ढङ्गले चित्रण गरिएको छ । त्यसैगरी, छनोटद्वारा नै आत्माले दिव्यधामलाई पुनः प्राप्त गर्न सक्दछ र ऊ भगवद्धाम फर्किन सक्दछ ।

मृत्युको संकटपूर्ण क्षणमा, मानिसले आँखीभौको मध्यभागमा आफ्नो प्राण शक्तिलाई स्थिर गरेर आफू जान चाहेको लोकतर्फ जाने

निर्णय गर्न सक्दछ । यदि उसले भौतिक जगत्सँगको कुनै पनि सम्बन्धप्रति रूचि राखेको छैन भने ऊ केही सेकेण्ड भित्र नै दिव्य वैकुण्ठलोकभित्र प्रवेश गर्न सक्दछ र त्यहाँ पूर्णरूपले आफ्नै आध्यात्मिक शरीरमा प्रकट हुन सक्दछ जुन शरीर त्यहाँको आध्यात्मिक वातावरणसँग अनुकूल हुन्छ । उसले केवल दुवै स्थूल एवं सूक्ष्म अवस्थादेखि नै यस भौतिक जगत्लाई परित्याग गर्ने चाहाना राख्नुपर्दछ र आफ्नो प्राण शक्तिलाई तालुमा स्थिर गरी तालुमाथि रहेको छिद्र जसलाई 'ब्रह्म रन्ध्र' भनिन्छ, त्यहाँबाट आफ्नो शरीर त्याग गर्नुपर्दछ । यही नै योगाभ्यासको सर्वोच्च सिद्धि हो ।

निःसन्देह मानिससँग स्वतन्त्रता छ, यदि आफूलाई यस भौतिक जगत्बाट उद्धार गर्न नचाहेमा उसले ब्रह्मपद (ब्रह्माजीको पद)लाई भोग गर्दै सिद्धलोकको भ्रमण पनि गर्न सक्दछ, जहाँ भौतिक दृष्टिकोणले सिद्ध प्राणीहरू निवास गर्दछन् जो सँग गुरुत्वाकर्षण, अन्तरिक्ष एवं काललगायतका कुराहरूमाथि पूर्णनियन्त्रण गर्न सक्ने क्षमता हुन्छ । भौतिक ब्रह्माण्डभित्र रहेका ती उच्चलोकहरूको भ्रमण गर्नका लागि मानिसले आफ्नो मन एवं बुद्धि (सूक्ष्म तत्व) लाई परित्याग गरिरहनुपर्दैन । तर, त्यसका लागि उसले स्थूल तत्त्व (जड् शरीरलाई) भने परित्याग गर्नुपर्दछ ।

मानव निर्मित भू-उपग्रह एवं यान्त्रिक अन्तरिक्षयानहरूले किहिल्यै पनि मानिसलाई पृथ्वीबाहिर रहेका लोकलोकान्तरहरूसम्म पुऱ्याउन सक्दैनन् । यति मात्र होइन आजकाल सर्वाधिक विज्ञापन गरिने चन्द्रलोकको यात्रा पनि मानिस गर्न सक्दैन किनकि हामीहरूले पहिल्यै वर्णन गरेअनुसार यस्ता उच्चलोकहरूको वातावरण पृथ्वीलोकको वातावरणभन्दा भिन्नै किसिमको हुन्छ । ती प्रत्येक लोकहरूमा तिनीहरूका आफ्नै वातावरणले युक्त हुन्छन्, यदि कुनै

व्यक्ति भौतिक ब्रह्माण्डभित्र रहेका यी मध्ये कुनै एउटा विशेष लोकको यात्रा गर्न चाहन्छ भने उ सँग त्यस्तो भौतिक शरीर हुनुपर्ने हुन्छ, जुन त्यस लोकको मौसमी वातावरणसँग वस्तुतः अनुकुल भएको हुनुपर्दछ । उदाहरणार्थ यदि कुनै मानिस, भारतदेखि भिन्नै मौसमी वातावरण भएको युरोपका देशहरूमा जान चाहन्छ भने उसले त्यहाँको वातावरण अनुसार आफ्नो पोसाक बदल्नुपर्दछ । त्यसैगरी, यदि कुनै मानिस दिव्य वैकुण्ठ लोकमा जान चाहन्छ भने उसको शरीर पूर्णरूपले परिवर्तन हुनुपर्दछ ।

यदि कुनै मानिस उच्चतर भौतिकजगत्का लोकहरूमा जान चाहन्छ भने उसले मन एवं बुद्धिद्वारा निर्मित आफ्नो सूक्ष्म पोसाकलाई यथावत् राख्न सक्दछ तर पृथ्वी, अग्नि जललगायतका तत्त्वहरूद्वारा निर्मित स्थूल शरीरलाई भने परित्याग गर्नुपर्दछ । तर, जब कुनै मानिस दिव्यलोकतर्फ जान चाहन्छ उसले दुवै सूक्ष्म एवं स्थूल शरीरलाई बदल्नुपर्दछ किनकि मानिस पूर्णरूपले आध्यात्मिक स्वरूपमा मात्रै आध्यात्मिक आकाशभित्र प्रवेश गर्न सक्दछ । यदि मानिसले चाहेमा मृत्युकालमा शरीरको यो परिवर्तन स्वतः हुन पुग्दछ । तर, यदि हामीहरूले जीवनभर कुनै विशेष चाहनालाई पोषित गरेका छौं भने मात्रै मृत्युकालमा त्यस्तो चाहना स्फूरित हुन सम्भव हुन्छ । जहाँ मानिसको धन हुन्छ, त्यहाँ मानिसको हृदय हुन्छ । जब मानिसले भक्तिमय सेवाको अभ्यास गर्दछ, उसले भगद्धाम प्राप्त गर्ने चाहना राख्दछ । अब यहाँ निम्नलिखित जानकारीहरूलाई प्रस्तुत गरिए अनुसार जसले त्यस्तो एउटा साधारण अभ्यासको रूपरेखालाई तयार गर्दछ, जसद्वारा मानिसले वैकुण्ठलोकको सहजयात्राका लागि आफूलाई तयार गर्न सक्दछ, जहाँ जीवन जन्म, मृत्यु, जरा एवं व्याधिबाट मुक्त हुन्छ ।

साधारण अभ्यास (सकारात्मक क्रियाहरू)

१. वैज्ञानिकरूपले प्रशिक्षित हुनका लागि इमानदार प्रशिक्षार्थीले एकजना सुयोग्य गुरुलाई स्वीकार गर्नुपर्दछ । इन्द्रियहरू स्वभावैले भौतिक प्रकृतिका हुन्छन् र त्यही कारणले गर्दा तिनीहरू दिव्यतालाई बुझ्न असक्षम हुन्छन् । अतः सुयोग्य गुरुको मागदर्शनमा रहेर निर्धारित विधिहरूको पालना गरेर इन्द्रियहरूलाई अध्यात्मिक बनाउनुपर्दछ ।

२. जब कुनै विद्यार्थीले एउटा सुयोग्य गुरुको चयन गर्दछ उसले उहाँसँग उचित किसिमले दीक्षा ग्रहण गर्नुपर्दछ । यो कार्यले उसको आध्यात्मिक प्रशिक्षण प्रारम्भ भएको संकेत गर्दछ ।

३. प्रशिक्षार्थीले जसरी भए पनि आफ्ना गुरुलाई सन्तुष्ट गर्ने प्रयास गर्नुपर्दछ, त्यस्ता सुयोग्य गुरु, जो सम्पूर्ण आध्यात्मिक विज्ञानका विधिहरूमा प्रवीण हुनुहुन्छ, भगवद्गीता, श्रीमद्भागवत, वेदान्तसूत्र एवं उपनीषद लगायतका वैदिक शास्त्रका विद्वान् हुनुहुन्छ, स्वरूपसिद्ध हुनुहुन्छ तथा परमेश्वरसँग सम्बन्धीत हुनुहुन्छ, उहाँ नै त्यस्तो एउटा पारदर्शी माध्यम हुनुहुन्छ जसद्वारा वैकुण्ठलोक जान चाहाने प्रशिक्षार्थीलाई मार्गदर्शन मिल्दछ । गुरुलाई सम्पूर्ण किसिमले सन्तुष्ट राख्नुपर्दछ, किनकि केवल उहाँको सदिच्छाद्वारा नै प्रशिक्षार्थीले आफ्नो मार्गमा आश्चर्यजनक प्रगति गर्न सक्दछ ।

४. बुद्धिमान् प्रशिक्षार्थीले आफ्ना सम्पूर्ण सन्देहहरूलाई समाधान गर्नका लागि बुद्धिमानीपूर्वक जिज्ञासा गर्दछ । गुरुले ती प्रशिक्षार्थीलाई मनोमानी ढङ्गले नभई वैदिक अधिकारीद्वारा प्रदत्त नीतिनियम सिद्धान्तअनुसार मार्गदर्शन गर्दछन्, त्यस्ता अधिकारीहरूको नाम शास्त्रमा लेखिएको हुन्छ र उनीहरूले पनि आफ्ना गुरुको मार्गदर्शन

अनुसार नै ती नियमहरूको पालना गरेका हुन्छन् । सुयोग्य गुरु कहिल्यै पनि अधिकारीहरूले देखाएको मार्गवाट विचलित हुँदैनन् ।

५. प्रशिक्षार्थीले सधैं महान साधुसन्तहरूको पदचिन्हलाई अनुसरण गर्ने प्रयास गर्नुपर्दछ जसले भक्तिको यो विधिलाई अपनाएर सिद्धि प्राप्त गरेका हुन्छन् । यसैलाई जीवनको एकमात्र ध्येय बनाउनुपर्दछ। प्रशिक्षार्थीले ती साधुसन्तहरूका पदचिन्हलाई कृत्रिम रूपले अनुसरण नगरी देश काल र परिस्थिति अनुसार इमानदारितापूर्वक अनुसरण गर्नुपर्दछ।

६. प्रशिक्षार्थी प्रामाणिक शास्त्रहरूमा वर्णित आदेशअनुसार आफ्नो बानी व्यहोरालाई परिवर्तन गर्न तत्पर हुनुपर्दछ। भगवान्को सन्तुष्टिको लागि उसले अर्जुनको उदाहरणलाई पालन गर्दै इन्द्रियतृप्ति एवं इन्द्रिय बोध जस्ता क्रियाकलापहरूलाई त्याग गर्न तत्परता देखाउनुपर्दछ ।

७. प्रशिक्षार्थी पूर्णरूपले आध्यात्मिक वातावरणमा निवास गर्नुपर्दछ।

८. ऊ आफ्नो पालन-पोषण गर्नका लागि जति धन आवश्यक पर्दछ, त्यतिमै सन्तुष्ट हुनुपर्दछ। उसले सरल जीवन जिउनका लागि आवश्यक पर्ने धनभन्दा अधिक धन सञ्चय गर्नुहुँदैन ।

९. उसले औंसी एवं पूर्णिमाको एघारौं दिनमा पर्ने एकादशी लगायतका तिथिहरूमा उपवास गर्नुपर्दछ।

१०. उसले पीपल वृक्ष, गौमाता, विद्वान् ब्राह्मण एवं भक्तहरूको आदर गर्नुपर्दछ। भक्तिमय सेवाको पथमा अगाडि बढ्नका लागि यी कार्यहरू प्राथमिक सोपानहरू हुन् । यसरी उसले क्रमशः भक्तिमय सेवामा उन्नति गर्नका लागि आवश्यक पर्ने अन्य निषेधित कार्यहरूलाई पनि परित्याग गर्नुपर्दछ।

११. भक्तिमय सेवाका दौरान प्रशिक्षार्थी दश नामअपराध लगायतका अन्य अपराधिक कार्यहरूदेखि टाढै रहनुपर्दछ।

१२. उसले अभक्तहरूसँगको सङ्गलाई परित्याग गर्नुपर्दछ।

१३. उसले धेरैभन्दा धेरै शिष्यहरू बनाउनुहुँदैन। भन्नुको तात्पर्य के हो भने माथिका बाह्रौं विधिनियमहरूलाई सफलतापूर्वक पालना गर्ने प्रशिक्षार्थी पनि गुरु बन्न सक्दछ। ऊ त्यसैगरी गुरु बन्न सक्दछ, जसरी केही सीमित विद्यार्थी सङ्ख्या भएको कक्षामा कुनै एउटा विद्यार्थी त्यस कक्षाको नाइके बन्दछ।

१४. केवल शास्त्रहरूबाट श्लोक एवं उद्दरणहरूलाई प्रस्तुत गर्दै उसले आफैंलाई विद्वान बनाउनुहुँदैन। उसले भक्तिमार्गमा आवश्यक पुस्तकहरू बाहेक अन्य सांसारिक पुस्तकहरू बाट अनावश्यक ज्ञान आर्जन गर्नुहुँदैन।

१५. माथिका चौधवटै विधिनियमहरूलाई निरन्तर एवं सफलता पूर्वक अभ्यास गर्ने जो कोही प्रशिक्षार्थीले भौतिक लाभ हानिको ठुलाठुला समस्याहरूका बीच पनि मानसिक स्थिरता कायम गर्नसक्दछन्।

१६. त्यसको अर्को चरणमा प्रशिक्षार्थी शोक एवं मोहबाट प्रभावित हुनुहुँदैन।

१७. उसले न अन्य व्यक्तिको धर्म वा पूजन विधिलाई निन्दा गर्नुहुन्छ न परमेश्वर एवं उहाँका भक्तहरूको नै उपहास गर्नुहुन्छ।

१८. उसले भगवान् एवं उहाँका भक्तहरूमाथि गरिने निन्दा एवं दुर्व्यवहारलाई सहनु हुँदैन ।

१९. ऊ स्त्रीपुरुषबीचको सम्बन्धमा आधारित विषयवस्तुहरूको चर्चा परिचर्चा गर्ने कार्यमा निमग्न हुनुहुँदैन र साथै उसले आफ्ना

र अन्य परिवारहरूका अनावश्यक मामलाहरूप्रति कुनै रूचि राख्नुहुँदैन ।

२०. उसले कुनै पनि प्राणीलाई शरीरिक एवं मानसिक आघात पुऱ्याउनुहुँदैन ।

गम्भीर प्रशिक्षार्थीहरूका लागि माथि वर्णित यी बीसवटा विधिनियमहरूमध्ये प्रारम्भका तीन विधिहरू अपरिहार्य एवं अत्यन्त महत्त्वपूर्ण छन् ।

इमानदार प्रशिक्षार्थीले अझै अन्य ४४ विधि-नियमहरूको पालना गर्नुपर्दछ तर भगवान् चैतन्य महाप्रभुले यी मध्ये पाँच विधि नियमहरूलाई छनौट गर्नुभएको छ । यी विधिनियमहरूलाई उहाँले मानिसहरूको वर्तमान जीवनावस्थालाई मध्य नजर गरी चयन गर्नुभएको छ ।

१. **मानिसले भक्तसङ्ग गर्नुपर्दछ:** भक्तहरूको कुरा ध्यानपूर्वक सुनेर, उहाँहरूसँग अध्यात्मिक जिज्ञासाहरू गरेर, उहाँहरूलाई भोजन गराएर, उहाँहरूबाट भोजन ग्रहण गरेर, उहाँहरूलाई दान दिएर अथवा उहाँहरूले दिने प्रत्येक वस्तुलाई स्वीकार गरी मानिसले भक्तसङ्गलाई सार्थक गर्न सक्दछ ।

२. **मानिसले हरेक परिस्थितिमा भगवान्नामको संकीर्तन गर्नुपर्दछ:** आत्मसाक्षात्कारका लागि भगवन्नामको संकीर्तन गर्ने कार्य अत्यन्त सरल एवं सुलभ विधि हो । मानिसले जुनसुकै समयमा भगवान्का असङ्ख्य नामहरूमध्य कुनै एउटा नामको उच्चारण गर्न सक्दछ । तर, भगवन्नामको जप गर्दा हुन सक्ने दश नामअपराधबाट भने बच्नुपर्दछ । भगवान्का दिव्य नामहरूको संकीर्तन गर्दा दश नाम अपराधहरू हुन सक्दछन् र सम्भव भएसम्म यी सम्पूर्ण नाम अपराधहरूबाट मुक्त हुनुपर्दछ । तर, जे जस्तो

अवस्था भए पनि उसले निरन्तर भगवन्नाम संकीर्तन गर्ने प्रयास गरिरहनुपर्दछ।

३. **मानिसले श्रीमद्भागवतमा वर्णित दिव्य कथाहरूको श्रवण गर्नुपर्दछ:** सुयोग्य भक्तको टीका एवं भागवतकथा प्रामाणिक अनुवादहरूको सहायताले यो श्रवण विधि सम्भव हुन्छ।

४. **मानिसले भगवान् श्रीकृष्णको जन्मस्थल मथुराभूमिमा आफ्नो आवास निर्माण गर्नुपर्दछ:** अथवा उसले गुरुबाट उचित शिक्षा-दिक्षा प्राप्त गरी घरका सम्पूर्ण सदस्यहरूले पूजा गर्न सक्ने किसिमले आर्चविग्रहको स्थापना गरी आफ्नै घरलाई मथुराजस्तै बनाउनुपर्दछ।

५. मानिसले आफ्नो घरमा स्थापित आर्चविग्रहलाई अत्यन्त सावधानी एवं भक्तिपूर्वक अर्चना सेवा गर्नुपर्दछ जसले गर्दा घरको वातावरण पुर्णरूपले भगवद्धामको प्रतिमाजस्तै बन्दछ: यो कार्य दिव्य कलाको ज्ञान हुने एवं आफ्नो शिष्यहरूलाई उचित, विधिको ज्ञान दिन प्रदान गर्न सक्नुहुने गुरुको मार्गदर्शनद्वारा सम्भव हुन्छ।

उपर्युक्त पाँच विधिहरूलाई संसारभरिका जुनसुकै मानिसले पनि अपनाउन सक्दछ। यसरी जुनसुकै मानिस पनि भगवद्धाम फर्कनका लागि तयार हुन सक्दछ। मानिसले यो कार्यलाई विशेषगरी यस युगमा पतित जीवात्माहरूको उद्धार गर्नका लागि अवतरित हुनुभएका भगवान् श्री चैतन्य महाप्रभुले प्रदान गर्नुभएको विधिद्वारा सार्थक गर्न सक्दछ।

यस विषयमा अतिरिक्त जानकारी प्राप्त गर्नका लागि मानिसले 'भक्तिरसामृत सिन्धु' लगायतका वैदिक ग्रन्थहरूको अध्ययन गर्नुपर्दछ। भक्तिरसामृत सिन्धुलाई "नेक्टर अफ डिभोसन" भक्तिरसामृत भन्ने शीर्षकद्वारा अङ्ग्रेजी भाषामा संक्षेपमा प्रस्तुत गरिएको छ।

आफूलाई आध्यात्मिक लोकमा स्थानान्तरित गर्ने सम्पूर्ण प्रक्रियाअन्तर्गत मानिसले आत्माको स्थूल एवं सूक्ष्म आवरणहरूलाई हटाउनु पर्दछ। माथि उल्लेखित भक्तिमय क्रियाकलापहरू यतिसम्म शक्तिशाली छन् कि भक्तद्वारा ती कार्यहरू सम्पन्न गर्नाले प्राथमिक चरणमा नै उसले आफूलाई शीघ्र भावभक्तिको स्तरसम्म (भगवद्प्रेमभन्दा पहिलो स्तर) सम्म उठाउन सक्दछ। अथवा, उसले आफूलाई मानसिक एवं बौद्धिक कार्यहरूभन्दा उत्कृष्ट, भावको आध्यात्मिक धरातलसम्म उठाउँदछ। भगवत्प्रेम अथवा भावभक्तिमा हुने पूर्ण निमग्नताले मानिसलाई जड शरीर परित्याग गर्नेवित्तिकै आध्यात्मिक आकाशमा स्थानान्तरित योग्य बदन्छ। स्थूल शरीर धारण गरिरहनुपरेता पनि भक्तलाई भगवान्प्रतिको उसको अनन्य भक्ति एवं प्रगाढ प्रेमले आध्यात्मिक धरातलसम्म पुऱ्याइदिन्छ। भक्त तताएर रातो भएको फलामजस्तै हुन्छ, जसले अग्निको सम्पर्कमा आउँदा वस्तुतः फलामको नभएर अग्निको कार्य गर्दछ। यी कुराहरू त भगवान्को अगम्य एवं अचिन्त्य शक्तिद्वारा सम्भव हुन्छ, जसलाई गणना गर्न भौतिक विज्ञान असमर्थ्य छ। अतः मानिस निष्ठापूर्वक भगवद्भक्तिमा संलग्न हुनुपर्छ र आफ्नो निष्ठालाई दृढ बनाउनका लागि उसले यथासम्भव त्यस्ता भक्तहरूको व्यक्तिगत सङ्ग गर्नुपर्दछ अथवा उहाँको चिन्तन गर्नुपर्दछ, जो भगवद्भक्तिमा तल्लीन भएका हुन्छन्। यस्तो किसिमको सङ्गले मानिसलाई वास्तविक भगवद्भक्तिको विकास गर्न मद्दत गर्दछ, जसले आकाशमा बिजुली चम्किएजस्तै गरी सम्पूर्ण अनर्थहरूलाई नष्ट गरिदिन्छ। भक्तिमय सेवाका प्रशिक्षार्थीले आत्मसाक्षात्कारका यी विविध स्तरहरूलाई प्रत्यक्ष अनुभव गर्न सक्दछ, यसले उसलाई आध्यात्मिक आकाश तर्फको मार्गमा आफूले गरिरहेको सकारात्मक उन्नतिप्रति दृढ विश्वास उत्पन्न गरिदिन्छ।

तत्पश्चात ऊ भगवान् एवं उहाँको धामप्रति आसक्त हुन पुग्दछ। यही नै भगवत्प्रेमलाई प्राप्त गर्ने क्रमिक प्रक्रिया हो, जुन मानवजीवनको मूलभूत आवश्यकता हो।

यस विधिद्वारा सिद्धि प्राप्त गरेका ऋषिमुनि एवं राजर्षीलगायत महान् पुरुषहरूका उदाहरणहरू इतिहासमा पाइन्छन्, तीमध्ये केहीले निष्ठा एवं गम्भीरतापूर्वक यी मध्ये कुनै एउटा मात्रै विधिलाई अपनाएर भक्तिमा सिद्धि प्राप्त गरेका छन्। यस्ता केही महापुरुषहरू निम्नलिखित छन् :

१) सम्राट परीक्षित महाराजले श्रीशुकदेव गोस्वामीजस्ता अधिकारीबाट भागवत श्रवण गरी दिव्य पदलाई प्राप्त गर्नुभएको थियो।

२) श्री शुकदेव गोस्वामीले त्यही दिव्य पदलाई आफ्ना महान् पिता व्यासदेवद्वारा प्राप्त दिव्य सन्देशलाई अक्षरश: कीर्तन गरी प्राप्त गर्नुभएको थियो।

३) प्रह्लाद महाराजले त्यही आध्यात्मिक सिद्धिलाई निरन्तर भगवान्का चरणकमलको चिन्तनद्वारा प्राप्त गर्नुभएको थियो। उहाँले उक्त ज्ञान भगवान्का महान् भक्त माहामुनि नारदद्वारा प्राप्त गर्नुभएको थियो।

४) सौभाग्यकी देवी लक्ष्मीजीले त्यही सिद्धिलाई केवल भगवान्को चरणकमलको सेवाद्वारा प्राप्त गर्नुभएको थियो।

५) महाराज पृथुले यसलाई केवल भगवान्को अर्चना गरेर प्राप्त गर्नुभएको थियो।

६) सारथी अक्रुरजीले यही सिद्धिलाई केवल भगवान्को स्तुतीद्वारा प्राप्त गर्नुभएको थियो।

७) भगवान् रामचन्द्रका एकजना प्रसिद्ध वानर भक्त अतिमानव महावीर हनुमानजीले यही सिद्धिलाई केवल भगवान्को सेवक भावमा आज्ञापालन गरी प्राप्त गरेका थिए ।

८) महान् योद्धा अर्जुनले त्यही सिद्धिलाई केवल भगवान् कृष्णको सखा बनेर प्राप्त गरेका थिए, जहाँ भगवान कृष्णले अर्जुन एवं उहाँका अनुयायीहरूलाई दिव्य ज्ञान प्रदान गर्नका लागि भगवद्गीताको सन्देश सुनाउनुभएको थियो ।

९) बली महाराजले त्यही सिद्धिलाई शरीरसहित आफूसँग भएको सर्वस्व भगवान्का चरणकमलमा समर्पित गरेर प्राप्त गर्नुभएको थियो ।

यिनीहरू नै भगवद्भक्तिका नौ आदर्शहरू हुन् जसलाई नवधा भक्ति भनिन्छ । साथै प्रशिक्षार्थीले यी मध्ये कुनै एउटा दुईवटा, तीनवटा, चारवटा अथवा आफूले चाहेजति विधिलाई छनौट गरेर पालन गर्न सक्दछ । परमसत्यको सन्तुष्टिका लागि गरिएका यी सम्पूर्ण सेवाहरू आफैंमा पूर्ण छन् । यी सेवाहरू भौतिक धरातलमा भए जस्तै गुणात्मक एवं सङ्ख्यात्मकरूपले भिन्न हुँदैनन् । अध्यात्मिक धरातलमा दिव्य विविधताहरू भएता पनि त्यहाँ सम्पूर्ण कुराहरू एक अर्कासँग उस्तै हुन्छन् । अम्बरिष महाराजले माथि उल्लेखित भक्तिका सम्पूर्ण नवधा विधिलाई अपनाएर पूर्णसिद्धि प्राप्त गर्नुभएको थियो । उहाँ त्यही महान् भक्त हुनुहुन्थ्यो जसले आफ्नो मन भगवान्को चरणकमलमा स्थिर गर्नुभएको थियो । आफ्ना हातले भगवान्को मन्दिरको सरसफाई गर्नुभएका थियो । आफ्नो आँखालाई भगवान्को दर्शन गर्न र आफ्नो कानलाई विनम्र पूर्वक भगवान कृष्णका उपदेश सुन्न लगाउनु भएको थियो । आफ्नो नाकलाई भगवान्को चरणकम-लमा अर्पित तुलसीको सुगन्ध लिन लगाउनुभएको थियो । आफ्नो

पाऊ भगवान्को मन्दिरमा जानका लागि प्रयोग गर्नुभएको थियो र यसरी उहाँले आफ्ना इन्द्रियहरूलाई विषय वासनादेखि वञ्चित गराएर सम्पूर्ण शक्तिहरूलाई भगवान्को सेवामा लगाउनु भएको थियो। भक्तिमय सेवाका यी सम्पूर्ण कार्यहरूले उहाँलाई जीवनको परमसिद्धि प्राप्त गर्न सहायता गरेका थिए जसले उहाँलाई भौतिक विज्ञानका सम्पूर्ण कार्यकुशलताहरूबाट मुक्त गरिइदिएका थिए।

अतः जीवनको सर्वोच्च सिद्धिलाई प्राप्त गर्नका लागि सम्पूर्ण मानवजातिले आत्मसाक्षात्कारका यी सम्पूर्ण विधिनियमहरूलाई पालना गर्नुपर्दछ। आत्मसाक्षात्कार नै मानवजातिको एकमात्र कर्तव्य हो। तर, दुर्भाग्यवश, आधुनिक सभ्यताको यस विषम परिस्थितिमा मानवसमाज राष्ट्रिय दायित्वलाई सम्पन्न गर्नका लागि अत्यन्त व्यस्त रहेको छन्। वास्तवमा, आध्यात्मिक दायित्वबाट विमुख भएका मानिसहरूका लागि मात्र राष्ट्रिय, सामाजिक एवं मानवीय दायित्वहरू हुन्। मानिस यस धर्तीमा जन्म लिनासाथ ऊ आफ्नो राष्ट्र, समाज एवं मानवताको मात्र ऋणी नभएर उसलाई वायु, जल, प्रकाश आदि तत्त्वहरूको आपूर्ति गरिदिने देवीदेवताहरूको पनि ऋणि बन्दछ। यसका अतिरिक्त ऊ त्यस्ता महान् ऋषी महर्षीहरूको पनि ऋणि बन्दछ जसले उसलाई आफ्नो जीवनकाल पर्यन्त मार्ग दर्शन गर्नका लागि वैदिक ज्ञानका विशाल ज्ञान रत्नहरू प्रदान गरेका हुन्छन्। ऊ आफ्ना पितृहरू, पारिवारिक सदस्यहरू लगायतका सम्पूर्ण जीवात्माहरूको पनि ऋणि बन्दछ। तर, जब ऊ आध्यात्मिक सिद्धि प्राप्त गर्ने एउटै मात्र दायित्वमा संलग्न हुन्छ, उसले स्वतः कुनै पृथक प्रयासविना नै ती सम्पूर्ण दायित्व एवं ऋणहरूलाई चुक्ता गर्दछ।

भगवान्को भक्त कहिल्यै पनि समाज एवं राष्ट्रको अराजक तत्त्व हुन सक्दैन, ऊ त समाज एवं राष्ट्रको अमूल्य निधि हो। कुनैपनि

इमानदार भक्त पापपूर्ण क्रियाकलापहरूतर्फ आकर्षित हुँदैन । त्यसैले जब कुनै मानिस भगवान् कृष्णको भक्त बन्दछ, उसले यो जन्ममा मात्र नभएर आगामी जन्ममा पनि सबैले चाहेको शान्ति एवं सम्बृद्धिका लागि अनमोल सामाजिक सेवा प्रदान गर्न सक्दछ । यदि कुनै कारणवश त्यस्ता भक्तहरूले कुनै किसिमको अपराध गर्न पुगेमा पनि भगवान्ले तत्काल तिनीहरूका अपराधहरूलाई क्षमा गरिदिनुहुन्छ । अतः भक्तहरूलाई न त भौतिकवादी ज्ञानको परित्याग गर्न आवश्यक छ, न त सम्पूर्ण कुराहरूलाई परित्याग गरी त्यागी जीवन बिताउन आवश्यक छ । जीवनको जुनसुकै अवस्थामा पनि भक्त आफ्नै घरमा बसी निर्वाध रूपले भक्तिमय सेवालाई सम्पन्न गर्न सक्दछ । साथै अत्यन्त क्रूर मानिस पनि भक्तिमय सेवाको माध्यमद्वारा दयालु बनेका कयौं ऐतिहासिक उदाहरणहरू छन् । कुनै बाह्य प्रयास विना नै शुद्ध भक्तको हृदयमा ज्ञान एवं तुच्छ सांसारिक जीवन प्रतिको वैराग्य स्वतः उत्पन्न हुन पुग्दछ ।

सम्पूर्ण विश्वका लागि भारत वर्षका महान ऋषि-महर्षिहरूद्वारा प्रदत्त भक्तिमय सेवाको यो कला एवं विज्ञान परम कल्याणकारी रहेको छ । अतः भारतवर्षमा जन्म लिएका जो सुकैले पनि यी कला एवं विज्ञानको मद्दतद्वारा आफ्नो जीवनलाई सार्थक गर्ने दायित्वलाई वहन गर्नुपर्दछ । उसले यो दायित्वलाई विश्वका त्यस्ता स्थानहरूमा कृष्णभावनामय ज्ञानको प्रचार गरेर सम्पन्न गर्न सक्दछ, जहाँका मानिसहरू जीवनको परमलक्ष्यसँग अनभिज्ञ छन् । मानवसमाज ज्ञानको क्रमिक उन्नतिद्वारा सिद्धिको यो अवस्थासम्म पुग्नका लागि लक्षित हुनुपर्दछ । तर, भारत वर्षका महान् ऋषिमहर्षिहरूले यो अवस्थालाई पहिले नै प्राप्त गरिसकेका छन् । किन अन्य मानिसहरूले यो अवस्थालाई प्राप्त गर्न सयौं हजारौं वर्ष प्रतीक्षा गर्नुपर्दछ ? किन

तिनीहरूलाई तत्काल व्यवस्थित एवं वैज्ञानिक ढङ्गले यो ज्ञान प्रदान गरिँदैन जसका कारण तिनीहरूले आफ्नो समय र शक्तिको सञ्चय गर्न सक्दछन ? किनकि मानिसले आफ्नो मानवजीवनको लाभ उठाउनुपर्दछ जसलाई उनीहरूले लाखौं जन्मको परिश्रमका फलस्वरुप प्राप्त गरेका हुन्छन् ।

यतिबेला एकजना रूसी उपन्यासकारले सम्पूर्ण विश्वलाई वैज्ञानिक उन्नतिद्वारा मानिस अमर बन्न सक्दछ भन्ने सुझाब दिइरहेका छन् । निःसन्देह उनले ती परमजीवमाथि विश्वस गरेका छैनन्, जो सृष्टिकर्ता हुनुहुन्छ । तर, यति हुँदाहुँदै पनि हामीहरू उनको सुझावलाई स्वीकार गर्दछौं, किनकि वैज्ञानिक ज्ञानमा गरिएको वास्तविक प्रगतिले मानिसहरूलाई आध्यात्मिक आकाशतर्फ लिएर जानुका साथै वैज्ञानिकहरूलाई सम्पूर्ण जडवादी वैज्ञानिकहरूका अवधारणाहरूभन्दा माथि सर्वशक्तिमान् भगवान् हुनुहुन्छ भन्ने जानकारी प्रदान गर्नेछ ।

प्रत्येक जीवात्मासँग आफ्नै शाश्वत स्वरूप छ, तर उसले स्थूल एवं सूक्ष्म शरीररूपमा रहेका बाह्य आवरणहरूलाई परित्याग गर्नुपर्दछ, यसलाई प्राविधिक भाषामा जन्म एवं मृत्यु भनिन्छ । जबसम्म जीवात्माहरूलाई भौतिक बन्धनको जन्जिरद्वारा बाँधेर राखिन्छ, उसले परिवर्तनको यो प्रक्रियाबाट राहत प्राप्त गर्न सक्दैन जुन परिवर्तन भौतिक जीवनको सर्वोच्च स्तरसम्म पनि पुग्न सक्दछ । उपन्यास लेखकहरू कल्पित विचारहरूलाई लेख्न अभ्यस्त हुने भएका कारण ती रूसी उपन्यासकारले त्यस्तो कल्पना गर्न सक्दछन्, तर प्रकृतिको नियम सम्बन्धी थोरै मात्र ज्ञान भएका विचारशील व्यक्तिहरू भने यस जड जतगमा जीवन अमर छ भन्ने कुरालाई कहिल्यै विश्वास गर्न सक्दैनन् ।

एउटा प्रकृतिवादीले भौतिक प्रकृतिका सामान्य क्रियाकलापहरूलाई केवल एउटा फलको अध्ययनद्वारा हेर्ने गर्दछ। वृक्षबाट एउटा सानो फूल उत्पन्न हुन्छ, उक्त फूलबाट फल उत्पन्न हुन्छ, त्यो फल बढ्दछ र वृक्षको हाँगामा केही समयसम्मका लागि बस्दछ। जब त्यो फल पूर्णरूपले परिपक्व हुन्छ, त्यसपछि वृक्षबाट नझरेसम्म सुक्न थाल्दछ। अन्ततः त्यो फल वृक्षबाट जमिनमा झरेर कुहिन थाल्दछ र पृथ्वीसँग मिल्दछ। त्यस फलले कुहीदै गर्दा आफ्ना बीजहरू प्रदान गर्दछ, जुन बीजहरू समय बित्दै जाँदा वृक्षमा परिणत हुन्छन् र पुनः तिनीहरूले अनेकौं फल उत्पन्न गर्दछन् र पुनः त्यही गतिलाई प्राप्त गर्दछन्। यसैगरी वृक्षको चक्र अगाडि बढिरहन्छ।

त्यसैगरी जीवात्मा (परमात्माको एउटा सूक्ष्म आध्यात्मिक स्फूलिङ्ग) ले पनि मैथुन क्रिया पश्चात माताको गर्भभित्र जैविक स्वरूपलाई धारण गर्दछ। माताको गर्भभित्र जीवात्माको वृद्धि हुन्छ र अन्तत उसको जन्म हुन्छ। त्यसपद्धि निरन्तर वृद्धि हुँदै ऊ बालक, किशोर, युवा, वयस्क एवं वृद्ध बन्दछ। उपन्यास लेखकहरूले देखाएका आशावादी सपनाहरूका बाबजुद पनि ऊ क्षीण हुन पुग्दछ र उसको मृत्यु हुन्छ। यसरी तुलना गर्ने हो भने मानिस एवं वृक्षको फलबीच कुनै अन्तर छैन। वृक्षको फलले जस्तै गरी मानिसले पनि आफ्ना बाल बच्चाहरूका बीज छोडेर जान्छ, तर भौतिक प्रकृतिको नियमका कारण ऊ यस भौतिक शरीरभित्र शाश्वत रूपले रहिरहन भने सक्दैन।

अतः कसले भौतिक प्रकृतिको नियमको उलङ्घन गर्न सक्छ र? वैज्ञानिकहरू जतिसुकै ठुलाबडा भएतापनि तिनीहरूले भौतिक प्रकृतिको बलवान् नियमलाई बदल्न सक्दैनन्। कुनै पनि खगोलविद तथा वैज्ञानिकले ग्रहहरूका क्रियाहरूलाई बदल्न सक्दैनन्। तिनीहरूले त केवल आफूद्वारा भू-उपग्रह भनेर बोलाइने खेलौना ग्रह बनाउन

सक्दछन् । मूर्ख मानिसहरू यी कार्यहरूद्वारा प्रभावित हुन सक्दछन्, र तिनीहरूले स्पूतनिक, कृत्रिम भू-उपग्रहलगायतका आधुनिक प्रविधिहरूको आविष्कार गर्ने वैज्ञानिकहरूलाई ठूलो कृतज्ञता अर्पण गर्न सक्दछन् । तर, मानव जातिको विचारशील वर्गले भने भौतिकवादी वैज्ञानिकहरूको पहुँचभन्दा पर रहेका चन्द्र, सूर्य लगायतका विशाल भू-उपग्रहको सृष्टि गर्ने सृष्टिकर्ताप्रति अधिक कृतज्ञ हुन्छन् । यदि रूस तथा अमेरिकामा खेलौना भू-उपग्रह आविष्कार गर्ने आविष्कारकहरू छन् भने अध्यात्मिक आकाशमा रहेका विशाल भू-उपग्रहहरूका पनि आफ्नै सृष्टिकर्ता हुनुहुन्छ भन्ने कुरा सान्दर्भिक हुन्छ । यदि एउटा तुच्छ खलौना भू-उपग्रहको निर्माण गर्न एवं त्यसलाई आफ्नो कक्षमा स्थित गर्नका लागि त अनेकौं वैज्ञानिक मस्तिष्कहरूको आवश्यकता पर्दछ भने तारापूञ्जहरू सृष्टि गर्न एवं तिनीहरूलाई आफ्नो कक्षमा स्थित गर्नका लागि कस्तो किसिमको सूक्ष्म र परिपूर्ण मष्तिष्कको आवश्यकता पर्दछ होला ? यसरी नास्तिकवादी यो प्रश्नको उत्तर दिन सकेका छैनन् ।

अविश्वासीहरूले सृष्टिको बारेमा आफ्नै मतलाई अगाडि सार्ने गर्दछन् । जसमा साधारणतया यस्ता भनाइहरू सम्मिलित हुन्छन्, "यो कुरा बुझ्न कठिन छ ।" हामी यसको कल्पना गर्न सक्दैनौं, तर यो केही हदसम्म सम्भव छ । यसलाई अध्ययनद्वारा सकिंदैन । यी कुराहरूको एउटै मात्र आशय के हो भने तिनीहरूका भनाईहरूमा कुनै पनि प्रामाणिक आधार छैन र साथै तिनीहरू कुनै पनि वैज्ञानिक तथ्यद्वारा समर्थित छैनन् । तिनीहरूले केवल परिकल्पना गर्दछन् । तर, भगवद्गीतामा भने प्रामाणिक जानकारी उपलब्ध छन् । उदाहरणका लागि भगवद्गीतामा वर्णन गरिए अनुसार यस भौतिक जगत्मा यस्ता जीत्माहरू छन् जसको आयु ४,३००,००० ×

१,००० × २ × ३० × १२ × १०० सौर्य वर्षको हुन्छ। हामीहरू भगवद्गीतालाई आधिकारिक मान्दछौं, किनकि परमज्ञानको यो ग्रन्थलाई शंकराचार्य, श्री रामानुजाचार्य, श्री मध्वाचार्य एवं श्री चैतन्य महाप्रभु लगायत भारतवर्षका महान सन्त महात्माहरूले स्वीकार गरेका छन् । यस भौतिक जगत्मा रहेका सम्पूर्ण जड स्वरूपहरू आफ्नो लामो जीवनावधि भएपनि नष्ट हुने छन् र विलय हुने छन्।

अत: भौतिक शक्ति आफ्नै अन्त: शक्तिद्वारा संरक्षित भएतापनि सम्पूर्ण जड स्वरूपहरू परिवर्तनकारी छन् । पदार्थले कुनै विशेष किसिमको स्वरूप ग्रहण गर्दछ, ऊ केही समय अस्तित्त्वमा रहन्छ, परिपक्व हुन्छ, बृद्ध हुन्छ, क्षीण हुन्छ र अन्तमा पुन: नष्ट हुन्छ। यही नै सम्पूर्ण जड वस्तुहरूको विशेषता हो । यस भौतिक आकाशभन्दा पर केही अन्य स्वरूहरू छन्, जुन हाम्रो दृष्टिकोणको सिमानाभन्दा पर छन्, जुन अद्भूत, अचिन्त्य छन्, भनेर भौतिकवादीहरूले दिएका विचारहरू आध्यात्मिक आकाशका दुर्वल संकेतहरू मात्रै हुन् । तर, आत्माको आधारभूत सिद्धान्त भने यो भन्दा पनि अझै निकट हुन्छ किनकि यसले प्राणीभित्र रहेर आफ्नो कार्य गरिरहेको हुन्छ। जब त्यो आध्यात्मिक तत्त्व शरीरबाट बाहिर निस्कन्छ, जड शरीर निर्जिव हुन्छ। उदाहरणार्थ, एउटा बालकको शरीरभित्र त्यही आध्यात्मिक तत्त्व रहेको कारण उसको शरीरमा परिवर्तन देखा पर्दछ र उसको वृद्धि हुन्छ । तर, यदि उक्त आत्माले शरीर छोड्ने बित्तिकै शरीरको वृद्धि रोकिन्छ। यो नियम प्रत्येक भौतिक वस्तुमा लागु हुन्छ । आत्माको सम्पर्कमा रहेका कारण पदार्थले एउटाबाट अर्को स्वरूप बदलिरहन्छ । आत्मा बिना शरीरमा कुनै किसिमको परिवर्तन आउँदैन। सम्पूर्ण ब्रह्माण्ड नै त्यसैगरी विकसित भएको हुन्छ। आत्मा दिव्यताको शक्तिबाट उत्पन्न हुन्छ किनकि त्यो आध्यात्मिक शक्ति

उहाँको हो र त्यही आत्मा चन्द्र, सूर्य, पृथ्वी लगायतका विशालकाय स्वरूपहरूमा विकसित हुन्छन् । यस ब्रह्माण्डमा चौध लोक त्रि-भूवन रहेका छन् । तिनीहरू विभिन्न क्षेत्रफल एवं विशेषताले युक्त भएतापनि विकासको त्यही नियम सर्वत्र लागु हुन्छ । उक्त आध्यात्मिक शक्ति नै सृष्टिकर्ताको शक्ति हो र यही आध्यात्मिक शक्तिद्वारा मात्र परिवर्तन, पारगमन एवं विकासका कार्यहरू सम्पन्न हुन्छन् ।

बहुसंख्यक मूर्ख मानिसहरूले दावी गरेअनुसार जीवन केवल रासायनिक संयोजनजस्तै देखिने रासायनिक क्रिया-प्रतिक्रियाको उत्पादन होइन । जड पदार्थहरूबीचको अन्तर्क्रियालाई ती परमात्माद्वारा क्रियाशलि गराइन्छ, जसले आध्यात्मिक जीवनशक्तिलाई बहन गर्न सक्ने उपयुक्त वातावरण सृजना गरिदिनुहुन्छ । उत्कृष्ट शक्तिद्वारा जीवात्माले आफ्नो स्वतन्त्र इच्छाअनुसार निर्धारण गरेको पदार्थलाई उचित स्वरूप प्रदान गरिन्छ । उदाहरणार्थ, निर्माण सामाग्रीहरू स्वत: एकै ठाउँमा मिली अचानक एउटा आवास गृहको रूपमा प्रकट हुन सक्दैनन् । त्यसैगरी जीवात्माले पनि आफ्नो स्वतन्त्र इच्छाद्वारा उपयुक्त ढङ्गले पदार्थलाई धारण गर्दछ र यसरी एउटा आवासगृहको निर्माण गर्दछ । त्यसैगरी पदार्थ केवल निर्माण सामग्री हो तर आत्मा भने सृष्टिकर्ता हो । केवल अज्ञानी मानिसले मात्रै यो विचारलाई स्वीकार गर्दैन । सृष्टिकर्ता पृष्ठभूमि पछाडि अदृश्य रहेका हुन सक्दछन्, तर त्यसको मतलब सृष्टिकर्ता नै छैनन् भन्ने होइन । मानिस केवल भौतिक ब्रह्माण्डको विशालकाय स्वरूपसँग मोहित हुनुहुँदैन । यसका अतिरिक्त, उसले यी सम्पूर्ण भौतिक सृष्टिका पछाडि रहेको परमबुद्धिलाई देख्न सक्ने ज्ञान प्राप्त गर्नुपर्दछ । परमात्मा, जो परमबुद्धि हुनुहुन्छ, उहाँ नै परम सृष्टिकर्ता, परम आकर्षक परमेश्वर

श्रीकृष्ण हुनुहुन्छ । मानिस यो कुरामा विज्ञ नहुन सक्दछ, तर भगवद्‌गीता एवं श्रीमद्‌भागवतलगायतका वैदिक शास्त्रहरूमा यी सृष्टिकर्ताका बारेमा स्पष्ट जानकारी प्रदान गरिएको छ ।

जब कुनै एउटा भू-उपग्रहलाई अन्तरिक्षमा प्रक्षेपण गरिन्छ, त्यसका सम्पूर्ण क्रियाकलापहरूका पछाडि अनेकौं वैज्ञानिक मस्तिष्कहरू आवद्ध भएका हुन्छन् भन्ने कुरा एउटा बालकले बुझ्न सक्दैन । तर एउटा युवकले भने पृथ्वीमा रहेका वैज्ञानिक मस्तिष्कहरूले उक्त भू-उपग्रहलाई नियन्त्रण गरिरहेका छन् भन्ने कुरा बुझ्न सक्दछ । त्यसैगरी, अल्पबुद्धि भएका मानिसहरूलाई सृष्टिकर्ता एवं आध्यात्मिक जगत्‌मा अवस्थित उहाँको शाश्वत धामको बारेमा कुनै पनि ज्ञान हुँदैन जुन धाम हाम्रो दृष्टिको सिमानाभन्दा धेरै पर रहेको छ । तर, वास्तवमा आध्यात्मिक लोकहरू भौतिक आकाशमा रहेका लोकहरूको सङ्ख्यामा धेरै छन् र तिनीहरू ठुला ठुला पनि छन् । भगवद्‌गीताबाट हामीहरूले भौतिक ब्रह्माण्ड त आध्यात्मिक ब्रह्माण्डको एक चौथाइ मात्र हो भन्ने जानकारी प्राप्त गरेका छौं । यस्ता जानकारीहरू श्रीमद्‌भागवत लगायतका अन्य वैदिक शास्त्रमा प्रशस्त पाइन्छन् ।

तर यदि जीवात्मालाई वैज्ञानिकहरूको प्रयोगशालामा केही जड पदार्थहरूको संयोजनद्वारा सृष्टि गर्न सकिन्छ भने किन अभिमानी भौतिकवादी वैज्ञानिकहरूले प्रयोगशालामा जीवनको आविष्कार गर्न सकिरहेका छैनन् ? आध्यात्मिक शक्ति पदार्थभन्दा पृथक छ भन्ने कुरा तिनीहरूले राम्रोसँग जान्नुपर्दछ । यस्तो शक्तिलाई जतिसुकै भौतिक पदार्थहरूको समायोजन गरेर पनि निर्माण गर्नु सम्भव छैन भन्ने कुरा तिनीहरूले जान्नुपर्दछ । वर्तमान समयमा निःसन्देह रसियाली एवं अमेरिकीहरू विज्ञान एवं प्रविधिका धेरै विभागहरूमा

अत्यन्त विकसित भएका छन् । तर, तिनिहरूले अझैसम्म पनि आध्यात्मिक ज्ञानमा अनभिज्ञ नै छन् । तिनीहरू पूर्ण र प्रगतिशील मानवसमाजको निर्माण गर्नका लागि ज्ञानको उच्चतर स्रोतबाट शिक्षा लिनुपर्दछ ।

श्रीमद्भागवत भित्र समाजवादी दर्शनको बारेमा परिपूर्ण व्याख्या गरिएको छ भन्ने कुरा रसियालीहरूलाई जानकारी छैन । श्रीमद्भागवतमा दिइएको जानकारीअनुसार यस जगत्मा जे जस्ता ऐश्वर्यहरू छन्, अथवा कृषी, खानी लगायतका जे जस्ता प्राकृतिक स्रोतहरू छन्, तिनीहरू सबै परम सृष्टिकर्ताद्वारा सृष्टि गरिएका हुन् । प्रत्येक जीवात्माले तिनीहरूको उपभोग गर्ने अधिकार प्राप्त गरेका छन् । यसका अतिरिक्त मानिसले केवल आफ्नो शरीरलाई पालन-पोषण गर्न पुग्ने धनसम्पत्तिको मात्र सञ्चय गर्नुपर्दछ भन्ने कुरा शास्त्रमा उल्लेख गरिएको छ । आफ्नो हिस्सा भन्दा अधिक संग्रह गरेमा उसले दण्ड भोग्नुपर्दछ । मानिसले पशुपंक्षीलाई पनि आफ्नै छोराछोरीसमान व्यवहार गर्नुपर्दछ भन्ने कुरा पनि शास्त्रमा उल्लेख गरिएको छ ।

श्रीमद्भागवतबाहेक विश्वका कुनै पनि राष्ट्रले समाजवादको व्याख्या गर्न सक्दैनन् भन्ने कुरालाई हामी विश्वास गर्दछौं । मानिसले मानिस बाहेक अन्य प्राणीहरूलाई तब मात्र आफ्ना भाइबन्धु एवं बा( लबच्चाहरूका रूपमा व्यवहार गर्दछ, जब उ सँग सृष्टिकर्ताको बारेमा पूर्ण ज्ञान हुनुका साथै जीवात्माको उत्पत्ति सम्बन्धी वास्तविक ज्ञान हुन्छ ।

मानिसको अमर बन्ने चाहना केवल आध्यात्मिक जगत्मा मात्रै साकार हुन सक्छ । यस लेखको आरम्भमा लेखिएअनुसार शाश्वत जीवनको चाहना भन्नु नै सुसुप्त आध्यात्मिक जीवन हो । त्यही

उद्देश्य प्राप्ति का लागि मानव सभ्यता अभिलक्षित हुनुपर्दछ । यहाँ वर्णन गरिएअनुसार भक्तियोगको विधिद्वारा प्रत्येक मानिसलाई आ( ध्यात्मिक जगत्तर्फ फर्काउने कार्य सम्भव हुन्छ। यो एउटा महानतम विज्ञान हो र भारतवर्षमा अनेकौं वैज्ञानिक शास्त्रहरू उपलब्ध छन् जसको मद्दतद्वारा जीवनको सिद्धिलाई साक्षात्कार गर्न सकिन्छ।

भक्तियोग नै मनुष्यको सनातन धर्म हो । जुन समय भौतिक विज्ञान धार्मिक सिद्धान्तहरूसहित अन्य सम्पूर्ण संकायहरूभन्दा प्रधान बन्दछ, त्यहीसमय आधुनिक विज्ञानको दृष्टिकोणद्वारा सनातन धर्मसम्बन्धी मनुष्यको मतलाई देखेर हामी उत्साहित हुने छौं। वैज्ञानिक दृष्टिकोणद्वारा स्वीकार नगरिएसम्म आधुनिक सभ्यतामा धर्मलाई स्वीकार गर्नुहुँदैन भन्ने कुरा स्वयं डा. राधाकृष्णन्ले विश्वधर्मसभामा भनेका थिए। यसको प्रत्युत्तरमा सत्यप्रेमी जनताहरूलाई हामीहरू के कुराको शंखघोष गर्न चाहान्छौं भने भक्तियोग नै विश्वको एउटै मात्र सनातन धर्म हो र यही नै प्रत्येक जीवात्माका लागि लक्षित छ, जुन शाश्वतरूपले ईश्वरसँग सम्बन्धीत छ।

श्रीपाद रामानुजाचार्यले 'सनातन्' शब्दलाई आदि र अन्त्य नभएको तत्त्व भनी व्याख्या गर्नुभएको छ। जब हामी सनातन धर्मको विषयमा बोल्दछौं, हामीहरू यो परिभाषालाई सर्वसुलभ एवं सर्वश्रेष्ठ मान्दछौं। जसको कुनै आदी र अनत्य छैन भन्ने कुरा पृथकवादी विचारसँग अमिल्दो छ, किनकि पन्थीवादमा केही सिमाना एवं हदबन्दीहरू हुन्छन्। आधुनिक विज्ञानको दृष्टिकोणअनुसार सनातन धर्म नै विश्वका सम्पूर्ण मानिसहरूको मूख्य धर्म हो भन्ने कुराको विचार गर्नु, हाम्रो लागि सम्भव हुनेछ। अन्य धर्महरू मानव इतिहासको कुनै चरणमा प्रारम्भ भएको हुन सक्दछ, तर सनातन धर्मको कुनै ऐतिहासिक प्रारम्भ छैन, यो त प्राणीहरूसँग शाश्वत कालदेखि रहँदै आएको धर्म हो।

जब कुनै मानिसले आफूद्वारा हिन्दु, मुसलमान, इसाई एवं बौद्धलगायतका कुनै धर्म विशेषलाई अङ्गिकार गरिएको दावी गर्दछ, अथवा उसले आफू जन्मिएको विशेष काल परिस्थितिलाई जनाउँदछ, यस्तो उपाधिहरूलाई असनातन धर्म भनिन्छ । एउटा हिन्दु धर्म परिवर्तनन गरी इसाई लगायत अन्य केही बन्न सक्दछ तर सम्पूर्ण परिस्थितिमा तत्त्व त एउटै हुन्छ । उसले अन्य प्राणीहरूको नै सेवा गरिरहेको हुन्छ । सम्पूर्ण परिस्थितिमा एउटा हिन्दु, मुसलमान एवं इसाई कसै न कसैको सेवक नै भइरहेको हुन्छ । मानिसहरूले दाबी गर्ने यी धर्मविशेषहरू सनातन धर्म होइन । सनातन धर्म जीवात्माको शाश्वत सहयात्री हो जसले सम्पूर्ण धर्मलाई एकीकृत गर्दछ, किनकि भगवान्‌को सेवा गर्नु नै सनातन धर्म हो ।

भगवद्‌गीतामा सनातन धर्मका अनेकौं उद्धरणहरू पाइन्छन् । यस प्रामाणिक पुस्तकबाट हामीहरू अब सनातन धर्मको महत्त्वका बारेमा विचार गर्नेछौं ।

भगवद्‌गीताको सप्तम अध्याय श्लोक सङ्ख्या १० मा 'सनातन' शब्दलाई उधृत गरिएको छ, जहाँ भगवान्‌ले उहाँ नै सम्पूर्ण कुराहरूका सनातन पुरुष हुनुहुन्छ भन्ने कुराको वर्णन गर्नुभएको छ । उपनिषद्‌हरूमा सम्पूर्ण कुराहरूको मूल उद्‌गमलाई पूर्ण पुरुषोत्तमका रूपमा व्याख्या गरिएको छ । आदि उद्‌गमका सम्पूर्ण सृष्टिहरू पनि आफैंमा पूर्ण छन् तर पूर्ण सनातन पुरुषबाट अनेकौं पूर्ण अंशहरू उत्पन्न भएता पनि सनातन आदि पुरुष भने गुण एवं मात्रामा उही रहनुहुन्छ, किनकि सनातनको स्वभाव अपरिवर्तनशील छ । अतः काल परिस्थिति अनुसार परिवर्तन हुने कुनैपनि कुरा सनातन हुँदैन । त्यसैगरी, गुण एवं परिमाणलगायतका कुराहरूमा परिवर्तन आउने कुनैपनि वस्तुलाई सनातन मानिँदैन । यसको एउटा भौतिक

उदाहरण सूर्य हो, सूर्यले हजारौं-लाखौं वर्ष अगाडि देखि ताप एवं प्रकाश प्रदान गरिरहेका छन्, भौतिक जगत्कै एउटा सृष्टि भएतापनि उनको प्रकाश एवं तापमा कुनै परिवर्तन आएको छैन । अतः त्यस्तो वस्तुको गुण एवं मात्रा कहिल्यै परिवर्तन हुँदैन, जसको कहिल्यै सृजन भएको हुँदैन । यस्तो वस्तु सम्पूर्ण कुराको उद्गम भएतापनि त्यो कहिल्यै परिवर्तन हुँदैन ।

भगवान्ले आफूलाई समस्त प्राणीहरूका पिता भन्नुभएको छ। उहाँले सम्पूर्ण जीवात्माहरू जे-जस्ता भएतापनि उहाँकै अंश हुन् भन्नुभएको छ । फलस्वरूप, भगवद्गीता ती सम्पूर्ण प्राणीहरूको लागि हो । गीतामा भगवान्को सनातन प्रकृतिको बारेमा जानकारी प्रदान गरिएको छ । गीतामा उहाँको धामको बारेमा पनि जानकारी दिइएको छ, जुन जड आकाश भन्दा धेरै पर रहेको छ । साथै, भगवद्गीतामा जीवात्माको सनातन प्रकृतिको बारेमा पनि व्याख्या गरिएको छ ।

भगवद्गीतामा भगवान् कृष्णले हामीहरूलाई यो जगत् जन्म, मृत्यु, जरा एवं व्याधिरूपि कष्टै कष्टहरूले भरिपूर्ण छ भन्ने कुराको जानकारी प्रदान गर्नुभएको छ । यस भौतिक ब्रह्माण्डको सर्वश्रेष्ठ लोक ब्रह्मलोकमा पनि यी कष्टहरूको उपस्थिति हुन्छ । केवल भगवान् श्रीकृष्णको नित्यधाममा मात्रै यी कष्टहरू हुँदैनन् । भगवान्को धाममा सूर्य, चन्द्र, प्रकाश एवं अग्नि जस्ता वस्तुहरूको आवश्यकता पर्दैन । उहाँका धामहरू स्वयं प्रकाशित छन् । त्यहाँ सच्चिदानन्दमय जीवन हुन्छ । त्यही धामलाई सनातन धाम भनिन्छ । उक्त सनातन धामको धर्मलाई नै सनातन धर्म भनिन्छ । अतः प्रत्येक जीवात्माहरू त्यही सनातन धाममा सनातन पुरुष अथवा पूर्ण पुरुषोत्तम भगवान् श्रीकृष्णका साथ सच्चिदानन्दमय जीवनको

रसास्वादन गर्नका लागि फर्किनुपर्दछ। जीवात्माहरू भौतिक जगत्को कष्टपूर्ण भूमिमा बसिरहनुहुँदैन। यस भौतिक मण्डलाभित्र कहीँ पनि सुख छैन - ब्रह्मलोकमा पनि सुख-शन्ति छैन - अतः कम बुद्धिमान व्यक्तिहरू यस भौतिक ब्रह्माण्डका उच्चतर लोकहरूमा जाने योजना बनाउँदछन् र तिनीहरू त्यही अनुरूप कार्य गर्दछन्। कम बुद्धि भएका व्यक्तिहरू देवीदेवताको शरणमा जान्छन्, तिनीहरूले देवीदेवताहरूबाट क्षणिक समयका लागि लाभ प्राप्त गर्दछन् किनभने तिनीहरूका धार्मिक नियमहरू एवं लक्षणहरू केवल अस्थायी हुन्छन्। तर, बुद्धिमान व्यक्तिले भने धर्मका नाममा गरिने यस्ता सम्पूर्ण क्रियाकलापहरूलाई परित्याग गर्दछ । यस्ता क्रियाकलापहरूलाई परित्याग गरी ऊ परमेश्वरको शरण ग्रहण गर्दछ र सर्वशक्तिमान् परमपिताबाट पूर्ण सुरक्षा प्राप्त गर्दछ। अतः सनातन धर्म नै भक्तियोगको त्यस्तो विधि हो जसद्वारा मानिसले सनातन ईश्वर एवं उहाँको सनातन धामलाई जान्न सक्दछ। यो विधिद्वारा मात्र मानिस सनातन धाममा उपलब्ध सनातन सुखको रसास्वादन गर्नका लागि आध्यात्मिक जगत्भित्र प्रवेश गर्न सक्दछ।

सनातन धर्मका अनुयायीहरूले अझै अगाडि बढ्ने क्रममा भगवद्गीताको भावनामा व्यक्त नियमहरू पालन गर्न सक्दछन्। ती सनातन नियमहरूलाई पालन गर्नका लागि केही पनि त्याग्नुपर्दैन। अत्यन्त कम बुद्धिमान व्यक्ति पनि भगवद्धाममा फर्किन सक्दछ। यही नै श्रीमद्भागवत एवं श्रीमद्भागवद्गीतामा साक्षात् श्री भगवान्द्वारा प्रदान गरिएको शिक्षामृत हो। मानवजातिलाई यो सुअवसरको लाभ उठाउने एउटा मौका प्रदान गर्नु। भगवद्गीताको ज्ञान भारतवर्षको भूमिमा वाचन भएको कारण, प्रत्येक भारतवर्ष (नेपाल एवं भारत) निवासीहरूले वास्तविक सनातन धर्मको

सन्देशलाई विश्वका अन्य स्थानहरूमा प्रचारप्रसार गर्ने जिम्मेवारी ग्रहण गर्नुपर्दछ। विशेषगरी वर्तमान समयमा पथभ्रष्ट मानिसहरूले अन्धकारमय भौतिकवादी जीवनको कष्ट भोगिरहे छन् र तिनीहरूका तथाकथित शिक्षा एवं ज्ञानले तिनीहरूलाई आणविक वमको आविष्कार गर्न सक्षम बनाइदिएको छ। फलस्वरूप उनीहरू विध्वंसतर्फ अगाडि बढिरहेका छन्। तर, सनातन धर्मले तिनीहरूलाई जीवनको वास्तविक उद्देश्य सम्बन्धी ज्ञान प्रदान गर्दछ र यसको प्रचारप्रसारद्वारा तिनीहरू अत्यन्त लाभान्वित हुने छन्।

# २

# विविध ग्रह प्रणाली

आजभोलि मानिसहरू चन्द्रलोक पुग्ने प्रयास गरिरहेका छन् तर कृष्णभावना भने पुरानै रीतिरिवाजसँग सम्बन्धीत छ भनेर मानिसहरू विचार गर्दछन् र तर, त्यो कुरा सत्य होइन । जब सम्पूर्ण विश्व चन्द्रलोक तर्फ अगाडि बढिरहेको थियो, हामीहरू भने 'हरे कृष्ण' महामन्त्रको कीर्तन गरिरहेका थियौं । मानिसहरूले हामीमाथि अनर्थ लगाउँदै हामीहरू आधुनिक विकास भन्दा धेरै पछाडि छौं भन्ने कुराको कल्पना गर्न सक्दछन् । तर, त्यस्तो कल्पना उचित होइन । मानिसद्वारा चन्द्रलोकतर्फ जानका लागि गरिएको प्रयास भगवद्गीताको वर्णनअनुसार कुनै नौलो कुरा होइन । समाचारपत्रको मुख्य समाचारमा नै "चन्द्रमामा मानिसको पहिलो पाइला" भन्ने शीर्षकको हुन्छ, तर पत्रकारहरूलाई लाखौं-लाख मानिसहरू त्यहाँ पुगेर फर्किसकेका छन् भन्ने कुराको ज्ञान छैन । चन्द्रमामा पाइला टेकेको यो पहिलोपटक होइन । यो एउटा प्राचीन अभ्यास हो । भगवद्गीता (८.१६) मा स्पष्टरूपले भनिएको छ ; **आब्रह्मभुवनाल्लोकाः पुनरावर्तिनोर्जुन** "हे अर्जुन ! ब्रह्मलोक भनेर चिनिने सर्वोच्च लोकमा पुग्यौ भने पनि तिमीलाई यहीँ फर्केर आउनुपर्नेछ ।" अतः अन्तर्ग्रहीय यात्रा कुनै नौलो कुरा होइन । कृष्णभावनामय भक्तहरूलाई यो कुराको ज्ञान हुन्छ ।

कृष्णभावनाभावित भएका कारण जुन कुरालाई भगवान् श्रीकृष्ण परमसत्य मान्नुहुन्छ त्यही कुरालाई हामी स्वीकार गर्दछौं । वैदिक वाङ्मयका अनुसार ब्रह्माण्डमा अनेकौं लोकलोकान्तरहरू छन् । हामीहरू निवास गरिरहेको लोकलाई भूर्लोक भनिन्छ। यो लोकभन्दा माथि भुवर्लोक छ। स्वर्गलोक (चन्द्रलोक एउटा स्वर्गलोक हो) भन्दा माथि महर्लोक छ, महर्लोकभन्दा माथि जनलोक छ र जनलोकभन्दा माथि सत्यलोक छ । त्यसैगरी पृथ्वीलोकभन्दा निम्न लोकहरू पनि छन् । यसरी कुल मिलाएर यस ब्रह्माण्डभित्र चौध लोक छन् र यिनीहरूमध्ये सूर्यलोक चाहीँ प्रमुख लोक हो । ब्रह्म संहिता (५.५२) मा सूर्यलाई यसरी वर्णन गरिएको छ ।

**यच्चक्षुरेष सविता सकलग्रहाणां**
**राजा समस्तसुरमूर्तिरशेषतेजाः ।**
**यस्याज्ञया भ्रमति सम्भृतकालचक्रो**
**गोविन्दमादिपुरुषं तमहं भजामि ॥**

"म उनै आदिपुरुष भगवान् गोविन्द (कृष्णलाई) प्राणाम गर्दछु जसको आज्ञाअनुसार सूर्य असीम ताप एवं शक्तिलाई धारण गरी आफ्नो कक्षमा घुमिरहन्छन् । सम्पूर्ण लोकहरूमध्ये प्रधान सूर्यदेव श्री भगवान्का चक्षु मानिनुहुन्छ ।" वास्तवमा, सूर्यविना हामीहरू देख्न सक्दैनौं । हामीहरूले आफ्नो आँखामा धेरै घमण्ड गर्न सक्छौं, तर सूर्यविना सँगै रहेको छिमेकीलाई पनि हामी देख्न सक्दैनौं । मानिसहरूले, "के तिमी मलाई भगवान् देखाउन सक्छौं ?" भनी हामीहरूलाई चुनौती दिन्छन्, तर तिनीहरूले के नै देख्न सक्दछन् र ? तिनीहरूको आँखाको के नै मूल्य छ र ? भगवान् त्यति सस्तो हुनुहुन्न । सूर्यकिरण विना हामीहरूले भगवान्को त के कुरा

वरपर रहेका कुनै पनि वस्तुलाई देख्न सक्दैनौं । सूर्य किरण बिना हामीहरू अन्धा जस्तै हुन्छौं । रात्रीको समयमा हामीहरूले केही पनि देख्न सक्दैनौं र त्यही कारण सूर्यको अनुपस्थितिमा हामीहरूले विद्युत प्रयोग गर्दछौं ।

यस ब्रह्माण्डीय सृष्टिमा केवल एउटै मात्र सूर्य नभएर लाखौं-करोडौं सूर्यहरू छन् । यो कुरालाई पनि ब्रह्म संहिता (५.४०) मा उल्लेख गरिएको छ :

**यस्य प्रभा प्रभवतो जगदण्डकोटि**
**कोटिष्वशेषवसुधादि विभूतिभिन्नम ।**
**तद् ब्रह्म निष्कलमनन्तमशेषभूतं**
**गोविन्दमादिपुरुषं तमहं भजामि ॥**

"परमपुरुष भगवान् कृष्णको दिव्य दैहिक ज्योतिलाई ब्रह्म ज्योति भनिन्छ र त्यही ब्रह्मज्योतिमा अनगिन्ती लोकलोकान्तरहरू रहेका छन् । जसरी सूर्यकिरणको वरिपरि अनेकौं लोकलोकान्तरहरू छन्, त्यसैगरी भगवान् कृष्णको दिव्य ज्योति वरपर पनि अनगिन्ती लोकलोकान्तर एवं ब्रह्माण्डहरू रहेका छन् । यस भौतिक जगत्मा लाखौं करोडौं ब्रह्माण्डहरू र लाखौं करोडौं चन्द्रसूर्यलगायतका लोकहरू छन् । तर, यी लोकहरूमा जान प्रयास गरेर मानिसहरूले केवल आफ्नो समयको मात्रै अपव्यय गरिरहेका छन् भन्ने कुरा भगवान् कृष्ण भन्नुहुन्छ ।

आजभोलि केही मानिसहरू चन्द्रलोक पुगेका छन् भन्ने समाचार सुन्न पाइन्छ । तर, मानव समाजले त्यसबाट के नै लाभ प्राप्त गर्न सक्छ र ? विशाल धनराशी शक्ति एवं दशौं वर्षको कठोर परिश्रमद्वारा चन्द्रलोक पुगेर त्यहाँको जमिनलाई स्पर्श नै गर्‍यो भने पनि त्यसबाट

के नै लाभ प्राप्त हुन्छ र ? के उसले त्यहाँ आफ्ना भाइबन्धुहरूलाई बोलाउन सक्दछ ? उसका भाइबन्धुहरू त्यहाँ पुगे तापनि त्यसबाट के नै लाभ प्रात हुन्छ र ? चाहे जुनसुकै लोकमा होस्, जबसम्म हामीहरू यस भौतिक जगत्मा रहिरहन्छौं, जन्म, मृत्यु, जरा, व्याधि लगायतका तिनै कष्टहरूले हामीहरूलाई पछ्याइ नै रहनेछन् । यहाँ रहुन्जेलसम्म हामीहरूले ती कष्टहरूबाट मुक्ति प्राप्त गर्न सक्दैनौं ।

चन्द्रमामा पुग्नु सम्भव छ भन्ने कुरालाई कल्पना गर्दै यदि हामीहरू त्यहाँ पुग्यौं भने पनि कतिन्जेलसम्म माक्सको सहायताले त्यहाँ रहन सक्दछौं ? यसका अतिरिक्त, हामीहरूले त्यहीँ रहिरहने अवसर प्राप्त गर्‍यौं भने पनि के नै लाभ प्राप्त गर्दछौं र ? सम्भवतः त्यहाँ हामीहरूले यहाँभन्दा केही दीर्घजीवन प्राप्त गर्न सक्दछौ, तर, त्यहाँ सदाका लागि हामीहरू रहिरहन पाउँदैनौं । त्यो सम्भव छैन, साथै लामो आयु प्राप्त गरेर पनि हामीहरूले के नै प्राप्त गर्न सक्दछौं र ? **'तरवः न जीवन्तिः'** के वृक्षहरू धेरै समयसम्म बाँचिरहदैनन् र ? सानफ्रान्सिस्को नजिकै मैले सात हजार वर्ष पुरानो वृक्ष देखेको छु । तर, त्यसबाट के फाइदा ? यदि कुनै मानिस एउटै स्थानमा सात हजार वर्षसम्म उभिएर बस्न सकेकोमा घमण्ड गर्दछ भने त्यो उसको महान उपलब्धि होइन ।

मानिस कसरी चन्द्रलोकसम्म पुगेर यहाँ फर्किन सक्दछ भन्ने जस्ता प्रसङ्गहरूको निकै लामो वर्णन छ र ती सबै वैदिक साहित्यमा वर्णित छन्, त्यो कुनै नयाँ प्रक्रिया होइन । तर, हाम्रो कृष्णभावनामृत सङ्घको उद्देश्य भने बेग्लै छ । हामीले आफ्नो अमूल्य समय त्यस्ता क्रियाकलापहरूमा व्यर्थै गुमाउँदैनौं । भगवान् श्रीकृष्ण भन्नुहुन्छ, "तिमी यो त्यो लगायतका ग्रहहरूमा जाने प्रयासमा आफ्नो अमूल्य समय नष्ट नगर । यसबाट तिमीले के नै पाउँछौं र ? जता गएतापनि

भौतिक क्लेशहरूले तिमीलाई पछ्याई नै रहने छन् ।" अत: चैतन्य चरितामृत (आदि लीला ३.९७) मा लेखक अत्यन्त सुन्दर ढङ्गले लेख्दछन् :

**केह पापे, केह पुण्ये करे विषय भोग ।**
**भक्ति गन्ध नाहि, याते याय भवरोग ॥**

यस भौतिक जगत्मा कोही सुखी छन् भने कोही दु:खी छन् यिनीहरू मध्ये कसैले सुख भोगिरहेको तथा अर्काले दु:ख पाइरहेको अनुभव गरेता पनि वस्तुत: यहाँ सबैजना दु:खी छन्। वास्तवमा यहाँ सबैजना पीडित छन्। यस भौतिक जगत्मा कुन चाहीँ प्राणीले व्याधी भोग्नु पर्दैन होला ? कोही पनि वृद्ध हुन एवं मर्न चाहँदैनन्, तर सबैजनाले मुर्नुपर्दछ । त्यसोभए यहाँ कहाँ सुख छ ? यी सम्पूर्ण सुखहरू त निरर्थक सुखहरू हुन् किनकि जड जगत्मा सुख नै छैन। यो त केवल हाम्रो कल्पना मात्रै हो। कसैले पनि "यो सुख हो, त्यो दु:ख हो।" भन्ने कुराको विचार गर्नुहुँदैन। यहाँ प्रत्येक कुराहरू दु:खै दु:खले भरिपूर्ण छन्। अत: चैतन्य चरितामृतमा भनिएको छ- यस जड जगत्मा, आहार, निद्रा, भय एवं मैथुनजस्ता क्रियाकलापहरू सधैँ भइरहन्छन् जुन विभिन्न स्तरका हुन्छन् ।" उदाहरणार्थ पूर्वजन्ममा आर्जित पुण्यकर्मको फलस्वरूप सम्पूर्ण अमेरिकीहरूले अमेरिकामा जन्म पाएका छन्। भारतमा मानिसहरू अत्यन्त गरीब छन् र पीडित पनि छन् । अमेरिकीहरूले मक्खन रोटी एवं भारतीयहरूले सुख्खा रोटी खाएपनि, खाने काम त एउटै हो। भारत अभावग्रस्त छ भन्दैमा सम्पूर्ण भारतीयहरू भोजनको अभावमा मर्न बाध्य भएका छैनन्। चाहे व्यक्ति गरिब होस् अथवा धनी, आहार, निद्रा, मय एवं मैथुन जस्ता शारीरिक मागहरूलाई सबै अवस्थामा

पूर्ति गर्न सकिन्छ । तर, कसरी जन्म, मृत्यु, जरा र व्याधिजस्ता कष्टहरूबाट मुक्ति प्राप्त गर्न सकिन्छ भन्ने नै हाम्रो मूल समस्या हो ।

यही नै वास्तविक समस्या हो । हाम्रो समस्या " अब मैले के खाने होला ?" भन्ने होइन । पशुपंक्षीहरू कुनै समस्यामा छैनन् । प्रातः हुँदा नहुँदै तिनीहरू "चिर्र, चिर्र, चिर्र" गर्दै चिर्विराउन थाल्दछन् । आफूले भोजन प्राप्त गर्ने कुरा तिनीहरूलाई थाहा हुन्छ, तिनीहरूका समाजमा कोही पनि भोकमरिले मरिरहेका छैनन् । साथै जनसंख्यावृद्धिको समस्या पनि छैन किनभने सबै लाई भगवानको व्यवस्थाद्वारा मिलाइएको हुन्छ । योनिहरूमा गुणात्मक भिन्नता मात्र देखिन्छ । तर भौतिक सुखभोगको उच्चस्तर प्राप्त गर्नु जीवनको लक्ष होइन । जीवनको वास्तविक समस्या त कसरी जन्म, मृत्यु, जरा एवं व्याधिजस्ता समस्याहरूबाट मुक्ति प्राप्त गर्न सकिन्छ भन्ने हो । यी समस्याहरूलाई केवल ब्रह्माण्डभित्रका लोलोकान्तरहरूको भ्रमण गरेर मात्रै समाधान गर्न सकिँदैन । यदि कुनै मानिसले सर्वोच्च लोक नै प्राप्त गऱ्यो भने पनि सर्वत्र मृत्युको उपस्थिति हुन्छ ।

वैदिक जानकारीअनुसार चन्द्रलोकमा प्राणीको जीवनावधि दश हजार वर्षको हुन्छ र त्यहाँको एक दिन यहाँको ६ महिना बराबर हुन्छ । यसरी त्यहाँको आयु १८० X १०,००० वर्ष बराबरको हुन्छ । तर, पृथ्वीवासीहरूलाई त्यहाँ गएर धेरै लामो समयसम्म बसिरहनु सम्भव छैन । अन्यथा सम्पूर्ण वैदिक साहित्यहरू त्रुटिपूर्ण हुने थिए । हामी त्यहाँ जाने प्रयत्न गर्न सक्दछौं, तर त्यहाँ गएर बस्नु सम्भव छैन । वेदमा यो ज्ञान प्रदान गरिएको छ । अतः हामीहरू भौतिक जगत्‌को यी अथवा ती लोकहरूमा जान इच्छुक छैनौं ।

हामीहरू सीधै भगवान् श्रीकृष्ण निवास गर्नुहुने लोकमा जान चाहन्छौं । भगवद्गीता (९.२५) मा भगवान् श्रीकृष्ण भन्नु हुन्छ :

**यान्ति देवव्रता देवान् पितॄन यान्ति पितृव्रताः ।**
**भूतानि यान्ति भूतेज्या यान्ति मद्याजिनोऽपि माम् ॥**

कुनै मानिस चन्द्रलोकमा जान सक्ला, कुनै मानिस सूर्यलोक लगायतका अन्य लाखौं-करोडौं लोकहरूमा जान सक्लान अथवा स्थूल भौतिकवादी यहीँ रहन सक्ला, तर मेरा भक्तहरू भने मेरै लोकमा आउने छन् ।" यही नै हाम्रो प्रमुख उद्देश्य हो । कृष्णभावनामृत अभियानमा दीक्षा दिने व्यवस्थाले अन्ततः शिष्यलाई परमधाम कृष्णलोकतर्फ जान निश्चित गर्दछ । हामी निकम्मा भएर बसिरहेका छैनौं । हामीहरू पनि अन्य लोकहरूमा जान प्रयत्न गरिरहेका छौं, तर हामीहरूले विरलै समय नष्ट गरिरहेका छैनौं ।

कुनै पनि विचारशील एवं बुद्धिमान् व्यक्ति भौतिक जगत्भित्रका कुनै पनि लोकमा जान चाहँदैन किनकि ती सम्पूर्ण लोकहरूमा भौतिक जगत्का चार कष्टहरू विद्यमान हुन्छन् । भगवद्गीताबाट हामीहरू यो कुरा बुझ्न सक्दछौं की यस भौतिक ब्रह्माण्डभित्रको सर्वोच्च लोक ब्रह्मलोकमा पनि ती चार किसिमका कष्टहरू विद्यमान हुन्छन् । ब्रह्माजीको एक दिन हाम्रो गणनाअनुसार लाखौं करोडौं वर्षको हुन्छ । यो कुरा हामीहरूले भगवद्गीताबाट बुझेका छौं । त्यो नै सत्य हो ।

हामीहरू सबैभन्दा उच्चतर लोक ब्रह्मलोकसम्म पनि पुग्न सक्दछौं, तर वैज्ञानिकहरूले भनेअनुसार त्यहाँसम्म पुग्न स्पुतनिक अन्तरिक्ष यानको गति अनुसार ४०००० वर्ष लाग्दछ । ४०००० वर्षसम्म अन्तरिक्ष यात्रा गर्न को तयार छ ? हामीहरू आफूले जान

चाहेको जुनसुकै लोकमा जान सक्दछौं भन्ने कुरा वैदिक शास्त्रमा वर्णन गरिएको छ, तर त्यसका लागि हामी तयार हुनुपर्दछ। यदि कुनै मानिस देवीदेवताको निवास स्थल मानिने उच्चतर लोकहरू (स्वर्गीय लोकहरू)मा जान चाहन्छ भने, ऊ त्यहाँ जान सक्दछ। त्यसैगरी, निम्नलोकहरूमा जान चाहेमा मानिस त्यहाँ पनि जान सक्दछ अथवा उसको इच्छा भए ऊ पृथ्वीलोकमा नै बसिरहन पनि सक्दछ। अन्ततः यदि कनै मानिस भगवद्धाम जान चाहन्छ भने ऊ त्यहाँ पनि जान सक्दछ। यो त केवल अभ्यासको कुरा हो। तर, भौतिक ब्रह्माण्ड भित्रका सम्पूर्ण लोकहरू अस्थायी छन्। कुनै लोकमा जीवनावधि बढी होला र कुनैमा कम, तर यस भौतिक ब्रह्माण्ड भित्रका सम्पूर्ण प्रणीहरू अन्तत नष्ट हुने छन् र तिनीहरूले अर्को शरीर धारण गर्नुपर्ने हुन्छ। भौतिक जगर्त्मा अनेकौं किसिमका शरीरहरू छन्। मनुष्य शरीर १०० वर्ष सम्म जीवित रहन सक्दछ भने किराफट्याङ्ग्राको शरीर १२ घण्टासम्म जीवित रहन सक्ला। यसरी यी विविध किसिमका शरीरहरूको आयु सापेक्ष छ। तर, यदि कुनै मानिस आध्यात्मिक लोक वैकुण्ठधाममा पुग्दछ भने उसले सच्चिदानन्दमय जीवन प्राप्त गर्दछ। भगवद्गीतामा यो कुरालाई उल्लेख गरिएको छ जहाँ भगवान् भन्नुहुन्छ, "परमपुरुष भगवान्लाई यथार्थरूपले जान्ने जुनसुकै व्यक्तिले पनि मेरो स्वभावलाई प्राप्त गर्दछ।"

धेरै मानिसहरू "ईश्वर महान् हुनुहुन्छ" भन्दछन्। तर, यो त केवल तिनीहरूको व्यक्तिगत र साधारण भनाइ मात्रै हो। तिनीहरूले उहाँ कत्तिको महान् हुनुहुन्छ भन्ने कुरा बुझ्न सक्छन् र यो कुरा मात्र प्रामाणिक शास्त्रहरूबाट जान्न सकिन्छ। भगवद्गीतामा भगवान् स्वयंले आफ्नो वर्णन गर्नुभएको छ। उहाँ भन्नुहुन्छ– सामान्य मानिसको झैं लाग्ने मेरो जन्मकर्म वास्तवमा दिव्य छन्। भगवान्

हाम्रा अगाडि एउटा सामान्य मानव रूपमा प्रकट हुनुभएको कारण उहाँ हामीमाथि अत्यन्त कृपालु हुनुहुन्छ, तर उहाँको शरीर भने मानिसको जस्तो हुँदैन । भगवान् कृष्णका बारेमा ज्ञान नहुने मुर्खहरू उहाँलाई तिनीहरूमध्येकै एकजना सोच्दछन् । यो कुरालाई पनि भगवद्गीता (९.११) मा उल्लेख गरिएको छ :

**अवजानन्ति मां मूढा मानुषीं तनुमाश्रितम् ।**
**परं भावमजानन्तो मम भूतमहेश्वरम् ॥**

"मूर्खहरू म परमेश्वरको दिव्य स्वभावलाई नबुझेर मनुष्यरूपमा अवतरित मेरो उपहास गर्दछन् ।" हामीहरूले भगवान् कृष्णको बारेमा जान्ने अवसर प्राप्त गरेका छौं, तर त्यसका लागि भने हामीहरूले उचित निर्देशनमा रहेर उचित शास्त्रको अध्ययन गर्नुपर्दछ । यदि हामीले भगवान्‌को स्वभावलाई मात्रै जान्न सक्यौं भने पनि हाम्रो उद्धार हुनेछ । मनुष्य जीवनमा पूर्णरूपले परम पुरुष भगवान्‌लाई जान्नु सम्भव छैन । तर, भगवद्गीतामा भगवान् श्रीकृष्णद्वारा प्रदान गरिएका उपदेश एवं सुयोग्य गुरुले दिनुभएको उपदेशको सहायताद्वारा हामीहरूले उहाँलाई जान्दछौं भगवान् कृष्ण भन्नुहुन्छ, "**त्यक्त्वा देहं पुनर्जन्म नैति मामेति सोऽर्जुनः** "ज्ञानमा स्थित हुने व्यक्तिहरू शरीर छोड्नासाथ पुनः यस भौतिक जगत्‌मा फर्किंदैनन्, तिनीहरू त मेरै परम धाममा आउँदछन् ।" (गीता ४.९)

सर्वसाधारणहरूलाई यही उच्चकोटिको वैज्ञानिक ज्ञान प्रचारप्रसार गर्नु नै हाम्रो कृष्णभावनामृत आन्दोलाको एउटै उद्देश्य हो । यो विधि अत्यन्त सरल छ । केवल– **'हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे । हरे राम हरे राम राम राम हरे हरे ॥'** महामन्त्रको जप एवं कीर्तनद्वारा मानिसले आफ्नो हृदयको कल्मषलाई पखाल्न सक्दछ । यसरी पावन

नामको जप एवं कीर्तनद्वारा उसले म भगवान्को दासानुदास हुँ र मेरो एउटै मात्र कर्तव्य भगवान्को सेवा गर्नु हो भन्ने कुरा जान्दछ। यो विधि अत्यन्त आनन्दमय छ। हामीहरू 'हरे कृष्ण' महामन्त्रको जप तथा कीर्तन गर्दछौं, लयबद्ध एवं तालबद्ध भएर नृत्य गर्दछौं र स्वादिष्ट कृष्णप्रसाद सेवन गर्दछौं। यसै जन्ममा आनन्द लिँदै हामीहरू आगामी जन्ममा भगवद्धाम जाने तयारी गरिरहेका छौं। यो कुनै जालसाजी नभएर सत्यता हो। एउटा सर्वसाधारण व्यक्तिलाई यो कुनै जालसाजी जस्तो लाग्न सक्दछ, तर जो मानिस ईश्वर साक्षात्कारको मार्गमा इमानदार छ, उस भित्रै भगवान् श्रकृष्ण स्वयं प्रकट भइदिनुहुन्छ। इमानदार आत्मालाई भगवान कृष्ण एवं गुरु दुवैले सहायता गर्दछन्। गुरु भगवान्का बाह्यरूप हुनुहुन्छ, जो सबैका अन्तर्यामी हुनुहुन्छ। यदि कुनै मानिस भगवद्तत्त्व जान्नका लागि इमान्दार छ भने परमात्माले तत्काल उसको सहायतास्वरूप एकजना प्रामाणिक गुरुकहाँ पठाइदिनुहुन्छ। यसरी उक्त आध्यात्मिक प्रशिक्षार्थीलाई बाहिर र भित्रबाट सहायता गरिन्छ।

श्रीमद्भागवत् महापुराणअनुसार परमसत्यलाई तीन चरणमा जान्न सकिन्छ। प्रथम चरण निराकार ब्रह्म तथा निर्विशेष ब्रह्मको साक्षात्कार हो, भने दोस्रो चरण परमात्मा साक्षात्कार हो। कुनै एउटा परमाणुको neutron (केन्द्रविन्दु) लाई परमात्माको प्रतीक मान्न सकिन्छ, जो परमाणुभित्र प्रवेश गर्नु हुन्छ। यो कुरालाई ब्रह्मसंहितामा पनि व्याख्या गरिएको छ। तर, अन्ततः परमात्मालाई सर्वाकर्षक परमपुरुष भगवान् श्रीकृष्णका रूपमा साक्षात्कार गरिन्छ, जो ऐश्वर्य, बल, ज्ञान, सौन्दर्य, वैराग्य रं ख्यातिजस्ता अचिन्त्य शक्तिहरूले सम्पन्न हुनुहुन्छ। यी षड्ऐश्वर्यहरूलाई प्रभु श्रीराम एवं श्रीकृष्णद्वारा पूर्णरूपले प्रदर्शन गरिएको थियो, जब उहाँहरू मनुष्यका माझ प्रकट

हुनुभएको थियो । तिनीहरूमध्ये केही शुद्ध भक्तहरूले मात्रै प्रकाशित ग्रन्थहरूको सहायताले उहाँलाई चिन्न सकेका थिए । तर, अन्य मानिसहरू भने माया शक्तिको प्रभावद्वारा मोहित भएका थिए । अतः परमसत्य नै परमपुरुष हुनुहुन्छ, जसको बराबरी एवं प्रतिस्पर्धा कोही छैनन् । जसरी सूर्यकीरण सूर्यको ज्योति हो, त्यसैगरी निराकार ब्रह्म उहाँको दिव्य शरीरबाट निःसृत ज्योति हो ।

विष्णु पुराणअनुसार, भौतिक शक्तिलाई अविद्या वा अज्ञानता भनिन्छ । यो इन्द्रियतृप्तिको सकाम कर्मद्वारा प्रदर्शित हुन्छ । यद्यपि, जीवात्मा मोहित हुने र इन्द्रियतृप्तिका लागि जड शक्तिको वशमा पर्ने स्वभावको भएतापनि ऊ अभौतिक अथवा आध्यात्मिक शक्ति अन्तर्गत पर्दछ हो । यो प्रसङ्गमा हामी के भन्न सक्दछौं भने जीवात्मा सकारात्मक शक्ति हो भने पदार्थ नकारात्मक शक्ति हो । पदार्थ आध्यात्मिक शक्ति तथा उत्कृष्ट शक्तिको सम्पर्कमा नआएसम्म विकसित हुन सक्दैन जुन प्रत्यक्षरूपमा आध्यात्मिक पूर्णताको अंशको पनि अंश हो । जीवात्माले प्रदर्शन गर्ने आध्यात्मिक शक्तिको विषयवस्तु साधारण मानिसका लागि निःसन्देह जटिल हुन्छ । अतः तिनीहरू यो विषयसँग विस्मित हुन्छन् । कहिलेकाहीँ उसले आफ्नो अपूर्ण इन्द्रियहरूको मद्दतद्वारा अंशिकरूपले यसलाई जान्न सक्दछ त कहिलेकाहीँ पूर्णरूपले जान्न सक्दैन । अतः परम अधिकारी भगवान् श्रीकृष्ण अथवा गुरु परम्परामा आवद्ध उहाँका शुद्ध भक्तहरूको मद्दतद्वारा यस विषयलाई श्रवण गर्नु नै उत्तम हुन्छ ।

यो कृष्णभावनामृत अभियान ईश्वरलाई बुझ्ने उद्देश्यका लागि बनेको हो । गुरु भगवान् कृष्णका जीवित प्रतिनिधि हुनुहुन्छ जसले हामीहरूलाई बाह्यरूपमा सहयोग गर्नुहुन्छ भने परमात्माका रूपमा भगवान् कृष्णले हामीहरूलाई आन्तरिक सहयोग गर्नुहुन्छ । जीवात्माले यस्तो मार्गदर्शनको लाभ उठाउन सक्दछ र आफ्नो जीवनलाई सार्थक

बनाउन सक्दछ। हामी सबैलाई प्रामाणिक शास्त्रहरूको अध्ययन गरी यो कृष्णभावनामृत आन्दोलनलाई बुझ्न अनुरोध गर्दछौं। हामीहरूले भगवद्गीता यथारूप, श्रीचैतन्य महाप्रभुको शिक्षामृत, श्रीमद्भागवत्, पूर्णपुरुषोत्तम भगवान् श्रीकृष्ण तथा भक्तिरसामृत सिन्धुलगायतका ग्रन्थहरू प्रकाशित गरेका छौं। साथै, हामीहरूले अनेकौं भाषामा 'भगवद्दर्शन' पत्रिका पनि प्रकाशित गरिरहेका छौं। मानव समाजलाई जन्ममृत्युको जोखिमपूर्ण चक्रबाट उद्धार गर्नु नै हाम्रो एउटै मात्र उद्देश्य हो।

सबैजनाले भगवान् कृष्णको धाम फर्किन प्रयत्नशील गर्नु पर्दछ। भगवद्दर्शन पत्रिकामा हामीहरूले "ब्रह्माण्ड पारी" भन्ने शीर्षकको एउटा लेख प्रकाशित गरेका थियौं। यो लेखमा भौतिक ब्रह्माण्डभन्दा पर रहेको एउटा स्थानको बारेमा व्याख्या गरिएको छ जुन भगवद्गीताभित्र वर्णित ज्ञानद्वारा प्राप्त भएको हो। भगवद्गीता एउटा प्रसिद्ध ग्रन्थ हो, अमेरिका एवं भारतमा मात्रै यसका अनेकौं संस्करणहरू छन्। तर, दुर्भाग्यवश, अनेकौं धूर्तहरू पाश्चात्य जगत्मा भगवद्गीताको प्रचारप्रसार गर्नका लागि आएका थिए। हामी तिनीहरूलाई धूर्तको उपाधि दिन्छौं किनभने तिनीहरू वास्तविक जानकारी नदिने ठगहरू हुन्। तर, हामीले प्रस्तुत गरेको भगवद्गीता यथारूपमा भने आध्यात्मिक प्रकृतिको प्रामाणिक व्याख्या प्रस्तुत गरिएको छ।

यो भौतिक सृष्टिलाई 'प्रकृति' भनिन्छ। तर, यो भन्दा पनि श्रेष्ठ अर्को प्रकृति छ। भौतिक सृष्टि निकृष्ट प्रकृति हो। तर, यो व्यक्त र अव्यक्त प्रकृतिभन्दा पर रहेको अर्को प्रकृतिलाई सनातन प्रकृति भनिन्छ। यस भौतिक जगत्मा उत्पादित सम्पूर्ण कुराहरू अनित्य छन्। यसको स्पष्ट उदाहरण हाम्रो शरीर हो। यदि कुनै मानिस

तीस वर्षको छ भने तीस वर्ष पहिला उसको शरीर व्यक्त थिएन र पुन: पचास वर्ष पछाडि उसको शरीर अव्यक्त हुनेछ। यो प्रकृतिको वास्तविक नियम हो। जसरी तरङ्गहरू लगातार उठ्ने एवं बिलाउने गर्दछन्, त्यसैगरी भौतिक शरीर पनि व्यक्त र पुन: अव्यक्त या परिणत हुन्छ। तर, भौतिकवादीहरू केवल भौतिक शरीरसँग मात्र चासो राख्दछन्, जुन कुनैपनि समय नष्ट हुन सक्दछ। यसका अतिरिक्त, जसरी यो शरीर मर्दछ, त्यसैगरी सम्पूर्ण ब्रह्माण्ड एवं यी विशालकाय जड शरीरहरू लगायत सम्पूर्ण कुराहरू नष्ट हुनेछन्। साथै, हामी जतिसुकै भाग्यमानी अथवा अभागी भएतापनि हाम्रा सम्पूर्ण कुराहरू नष्ट हुनेछन्। त्यसोभए हामीहरू किन त्यस्तो लोकमा जान आफ्नो समय नष्ट गर्दछौं, जहाँ सम्पूर्ण कुराहरू नष्ट हुने छन्? कृष्णलोक तर्फ जाने नै हाम्रो एउटै प्रयास हुनुपर्दछ। यही नै आध्यात्मिक विज्ञान हो र हामीहरूले यसलाई बुझ्ने चेष्टा गर्नुपर्दछ। जब हामीले यो ज्ञान बुझ्दछौं, यसलाई सारा विश्वभरि प्रचार गर्नुपर्दछ। सबैजना अन्धकारमा छन्। मानिसहरूसँग ज्ञान नभए पनि तिनीहरू अत्यन्त अभिमानी छन्। तर, दस वर्षको कठोर प्रयत्न गरेर चन्द्रलोकमा पुगी त्यहाँबाट केवल एउटा ढुङ्गा लिएर फर्कनु ज्ञानको विकास होइन। अन्तरिक्ष यात्रीहरू अत्यन्त अहङ्कारी छन्। तिनीहरू भन्दछन्– 'अहो! मैले चन्द्रमालाई छोएँ। तर, तिनीहरूले के लाभ प्राप्त गरे? हामीहरू त्यहाँ जान सकेता पनि धेरै लामो अवधिसम्म बस्न सक्दैनौं। अन्तत: त्यो सबै नष्ट हुनेछ।

हामीहरूले त्यस्तो लोकको खोजी गर्नुपर्दछ, जहाँबाट प्राणी कहिल्यै धर्तीमा फर्किंदैन, जहाँ शाश्वत जीवन हुन्छ र जहाँ प्राणीहरू भगवान्‌सँग नृत्य गर्न सक्दछन्। यही कृष्णभावनामृत आन्दोलनको मूल्य हो। यो आन्दोलनलाई सावधानीपूर्वक ग्रहण गर्नुहोस्,

कृष्णभावनामृतले हामीहरूलाई सधैका लागि भगवान् कृष्णसँग रहने र उहाँसँग नृत्य गर्ने एउटा अवसर प्रदान गर्दछ। यो भौतिक जगत् सम्पूर्ण सृष्टिको केवल एक चौथाइ मात्र हो भन्ने जानकारी हामीहरूले वैदिक शास्त्रबाट प्राप्त गर्दछौं। आध्यात्मिक सृष्टि ईश्वरद्वारा सृजित सम्पूर्ण सृष्टिको तीन-चौथाइ रहेको छ। भगवद्गीताबाट हामीहरूले यो कुराको जानकारी प्राप्त गर्न सक्दछौं। भगवान् कृष्ण भन्नुहुन्छ, “यो भौतिक जगत् मेरो सम्पूर्ण सृष्टिको एउटा सानो अंश मात्रै हो।” हामीहरूले बढीमा केवल आकाशलाई मात्र देख्न सक्दछौं। हाम्रो दृष्टिकोण केवल एउटा ब्रह्माण्डमा मात्रै सीमित छ, तर यस भौतिक जगत्भित्र असङ्ख्य ब्रह्माण्डहरूका झुण्डहरू छन्। तर, ती असङ्ख्य ब्रह्माण्डहरूका झुण्डहरूभन्दा पर एउटा आध्यात्मिक आकाश छ, जसलाई भगवद्गीतामा वर्णन गरिएको छ। भगवद्गीतामा भगवान् भन्नुहुन्छ– भौतिक जगत्भन्दा पर एउटा शाश्वत प्रकृति छ जसको कुनै आदि, मध्य एवं अन्त्य छैन। “शाश्वत” शब्दले त्यस्तो वस्तुलाई जनाउँदछ जसको कुनै सुरुआत एवं अन्त्य हुँदैन। अतः वैदिक धर्मलाई सनातन धर्म भनिन्छ किनकि यसको प्रारम्भ कहिलेदेखि भयो भन्ने कुराको कुनै इतिहास छैन। ईसाई धर्मको २००० वर्ष पुरानो इतिहास छ। इस्लाम धर्मको पनि आफ्नै इतिहास छ। तर, यदि कसैले वैदिक धर्मको इतिहास खोतल्दछ भने उसले त्यसको ऐतिहासिक उद्गमलाई जान्न सक्दैन। त्यसैले यसलाई सनातन धर्म भनिएको हो।

हामीहरूले न्यायसङ्गत ईश्वरद्वारा यस भौतिक जगत्को सृष्टि भएको हो भन्न सक्दछौं, र यो कुराले सृष्टि पूर्व नै ईश्वर हुनुहुन्थ्यो भन्ने कुराको संकेत गर्दछ। यहाँ सृजित शब्दले सृष्टिभन्दा पूर्व ईश्वर अस्तित्ववान् हुनुहुन्थ्यो भन्ने कुरा जनाउदछ। अतः ईश्वर सृष्टि

अधीनमा पर्नुहुन्न । यदि ईश्वर सृष्टिको अधीनमा हुनु हुन्थ्यो भने कसरी उहाँले सृष्टि गर्नुभयो होला ? यसका अतिरिक्त मानिसहरूले उहाँ पनि भौतिक सृष्टिकै एउटा उत्पादन हुनुहुन्छ भन्ने कुराको विचार गर्न सक्दछन् । तर, ईश्वर सृष्टिको अधीनमा हुनुहुन्न । उहाँ सृष्टिकर्ता हुनुभएका कारण सनातन हुनुहुन्छ ।

यस भौतिक जगत्भन्दा पर आध्यात्मिक आकाश छ, जहाँ असङ्ख्य आध्यात्मिक लोकहरूका साथै असङ्ख्य जीवात्माहरू छन् । तर, जुन प्राणी त्यहाँ बस्न अयोग्य हुन्छ, उसैलाई यस भौतिक जगत्मा पठाइन्छ । हामीहरूद्वारा स्वेच्छाले यो भौतिक शरीर स्वीकार गरिएको हो । तर, हामीहरू त्यस्ता जीवात्मा हौं जसले भौतिक शरीरलाई स्वीकार गरिरहनुपर्दैन । हामीहरूले कहिले र कसरी यसलाई स्वीकार गर्‍यौं, भन्ने कुराको कुनै इतिहास छैन । जीवात्माले सर्वप्रथम कुन समयमा जड शरीर धारण गरेको हो भन्ने कुरा कसैले पनि पत्ता लगाउन सकेको छैन । यस भौतिक सृष्टिमा ८४,००,००० प्रजातिका प्राणीहरू छन् । तिनीहरूमध्ये ९००,००० जलचर प्राणीहरू छन् भने २०,००,००० बोटवृक्ष प्रजातिका प्राणीहरू छन् । तर, दुर्भाग्यवश कनै पनि विश्वविद्यालयले यो वैदिक ज्ञानको शिक्षा दिइरहेका छैनन् । तर, यही नै सत्य हो । अब ती सम्पूर्ण जीवशास्त्री एवं मानवशास्त्रीहरूले वैदिक ज्ञानको निष्कर्षलाई बुझाउनुपर्दछ । निःसन्देह जैविक तत्त्वसम्बन्धी डार्विनद्वारा दिइएको सिद्धान्त शिक्षण संस्थानहरूमा पढाइने प्रधान विषय हो । तर, भगवद्पुराण एवं वैज्ञानिक महत्ताहरूले युक्त अन्य प्रामाणिक शास्त्रहरूमा स्पष्ट रूपले कसरी विविध योनिहरूमा स्थित जीवात्मा एकपछि अर्को शरीरमा विकसित हुँदै जान्छ भन्ने कुराको व्याख्या गरिएको छ । यो कुनै नवनिर्मित विचार होइन । वैदिक शास्त्रमा यस भौतिक जगत्भित्र प्राणीको जीवनावस्थाका बारेमा सम्पूर्ण जानकारी

प्रदान गरिएको भएतापनि आजभोलिका शिक्षकहरू केवल डार्बिनवादी सिद्धान्तमाथि जोड दिन्छन् ।

यस भौतिक जगत्का असङ्ख्य ब्रह्माण्डहरूमा निवास गरिरहेका प्राणीहरूमध्ये हामीहरू त केवल एउटा सनो अंश मात्रै हौं । यस भौतिक जगत्मा भौतिक शरीरले युक्त सम्पूर्ण प्राणीहरू कलुषित छन् । उदाहरणार्थ झ्यालखानाका कैदीहरू सरकारद्वारा दोषी ठहराइएका हुन्छन्, तर तिनीहरूको संख्या भने सम्पूर्ण जनसङ्ख्याको केही अंश मात्र हुन्छ । सम्पूर्ण नागरिकहरू नै झ्यालखानामा जान्छन् भन्ने होइन । तिनीहरूमध्ये जो अवज्ञाकारी छन्, तिनीहरूलाई मात्रै झ्यालखानामा कैद गरिन्छ । त्यसैगरी, यस भौतिक जगत्मा रहेको सम्पूर्ण जनसङ्ख्या त ईश्वरद्वारा सृजित प्राणी सङ्ख्याको एउटा सानो अंश मात्रै हो । भगवान् कृष्णको नियमलाई उलङ्घन गरेका कारण तिनीहरूलाई यस भौतिक जगत्मा कैद गरिएको हो । यदि कुनै मानिस समझदार एवं जिज्ञासु छ भने उसले, "मलाई किन जीवनको यस्तो अवस्थामा राखिएको हो, जसलाई म दुःख भोग्न चाहान्नँ" भन्ने कुराको जिज्ञासा गर्दछ ।

यस भौतिक जगत्मा शरीर एवं मनसम्बन्धीत तीन क्लेशहरू छन् । हवाईमा स्थित मेरो आवासगृह अगाडि एउटा मानिसले बधशालामा लिएर जानका लागि केही पशुहरूको पालन गरिरहेको थियो । मैले यो उदाहरण मेरा शिष्यहरूलाई दिने गरेको छु । यदि ती प्राणीहरू तिम्राअगाडि उभिएर बसेका छन् र तिमीले तिनीहरूलाई, "हे पशु हो, तिमीहरू यहाँ किन बसिरहेका उभिरहेको ? तुरुन्त भाग ! तिमीहरू मारिँदै छौ ।" भन्यौ भने के तिनीहरू भाग्ने छन् ? अहँ, भाग्दैनन् किनकि तिनीहरूसँग विवेक हुँदैन ।"

ज्ञान एवं समाधानविना कष्ट भोगिरहनु त पशुजीवन हो ।

आफूले यहाँ कष्ट र प्रतिकूल जीवन भोगिरहेको छु भन्ने कुरा जसले बुझ्न सक्दैन, त्यसको चेतना मानव चेतना नभएर पुशचेतना हो। मानव जाति त यस भौतिक जगत्मा विद्यमान त्रितापहरूसँग अवगत हुनुपर्दछ। उसले आफू जन्म, मृत्यु, जरा र व्याधिबाट पीडित भइरहेको कुरा बुझ्नुपर्दछ। साथै, ऊ कसरी यी कष्टहरूबाट मुक्त हुन सक्दछ भन्ने कुरा जान्नका लागि जिज्ञासु हुनुपर्दछ। त्यो नै वास्तविक अन्वेषण कार्य हो।

हामीहरूले आफ्नो जन्मको शुरुआत देखिने पीडा भोगिरहेका छौं। शिशु अवस्थामा मनुष्य नौ महिनासम्म माताको गर्भमा एउटा वायुबन्द थैलीभित्र बन्द हुन्छ। ऊ हलचल गर्न पनि सक्दैन, त्यहाँ उसलाई किराहरूले टोक्ने गरेता पनि उसले आफ्नो रक्षा गर्न सक्दैन। बालकको जन्म हुनासाथ पुनः उसको दुःख प्रारम्भ हुन्छ। माताले बालकको राम्रोसँग ख्याल गरेतापनि ऊ पीडाका कारण रूने गर्दछ। बालकलाई उडुसले टोकिरहेको हुन्छ र उसको पेट पनि दुखिरहेको हुन्छ। उसलाई कसरी शान्त पार्न सकिन्छ भन्ने कुराको ज्ञान मातालाई हुँदैन। त्यसपछि आफ्नो वृद्धि सँगसँगै ऊ पीडित हुन पुग्दछ। ऊ विद्यालय जान चाहँदैन, तर उसलाई विद्यालय जान बाध्य गराइन्छ। पढ्न नचाहँदा नचाहँदै पनि शिक्षकले उसलाई गृहकार्य दिन्छन्। यदि हामीले आफ्नो जीवनलाई विश्लेषण गर्ने हो भने यसलाई दुखैदुःखले परिपूर्ण देख्नेछौं। त्यसोभए, हामीहरू किन यहाँ आएका हौं ? बद्धजीव त्यति सुखी छैन। हामीहरूले "मैले किन दुःख भोगिरहेको छु ?" भन्ने जिज्ञासा गर्नुपर्दछ। यसको कुनै समाधान भए हामीहरूले त्यसको लाभ उठाउनुपर्दछ।

हामीहरू शाश्वतरूपले परम भगवानसँग सम्बन्धीत भएतापनि कुनै कारणवश यस भौतिक अपवित्राले युक्त भएका छौं। अतः

हामीहरूले त्यस्तो विधिलाई आत्मसात गर्नुपर्दछ, जसद्वारा हामी पुनः आध्यात्मिक जगत्‌मा फर्कन सक्दछौं । योग नै आध्यात्मिक एवं भौतिक जगत्‌लाई जोड्ने विधि हो । 'योग' शब्दको वास्तविक अनुवाद "जोड्नु" हो । वर्तमान समयमाल हामीहरू ईश्वरविहिन भएका छौं । तर, जब हामीहरूले आफुलाई ईश्वरसँग जोड्दछौं तब हाम्रो जीवन सार्थक हुन्छ । आफ्नो जीवनकालमा हामीहरूले परमसिद्धिको शिखरलाई प्राप्त गर्ने अभ्यास गर्नुपर्दछ र जब हामी मृत्युशय्यामा हुनेछौं, त्यही सिद्धिलाई साक्षात्कार गर्नुपर्दछ । मानिस मृत्युकालका लागि तयार हुनुपर्दछ । उदाहरणार्थ, विद्यार्थीहरूले २ देखि ५ वर्षसम्म कलेजमा अध्ययन गर्दछन् । तिनीहरूले प्राप्त गरेको शिक्षाको अन्तिम परीक्षण नै परीक्षा हो । यदि परीक्षामा उत्तीर्ण भए भने तिमीहरूले स्नातक तह प्राप्त गर्दछन् । त्यसैगरी, यदि हामीहरूले जीवनरूपी संकाय अन्तर्गत मृत्युकालमा आउने परीक्षाका लागि उचित तयारी गर्‍यौं र त्यसलाई उत्तीर्ण गर्‍यौं भने हामीहरूले भगवद्धाम प्राप्त गर्न सक्दछौं । मृत्युकालमा प्रत्येक कुराको परीक्षा हुने छ ।

यस सम्बन्धी एउटा प्रसिद्ध बङ्गाली भनाइ छ, "मुक्ति प्राप्त गर्नका लागि जसले जे जे कार्य गरेको हुन्छ, मृत्युकालमा त्यसको परीक्षा हुने छ ।" मृत्युकालमा हामीहरूले के-कस्ता कार्य गर्नुपर्दछ भन्ने कुरा भगवद्‌गीतामा वर्णन गरिएको छ । ध्यानयोगीका लागि भगवान् कृष्णले निम्नलिखित श्लोकहरू भन्नुभएको छ :

**यदक्षरं वेदविदो वदन्ति**
**विशन्ति यद्यतयो वीतरागाः ।**
**यदिच्छन्तो ब्रह्मचर्यं चरन्ति**
**तत्ते पदं संग्रहेण प्रवक्ष्ये ॥**

**सर्वद्वाराणी संयम्य मनो हृदि निरूध्य च ।**
**मूर्ध्न्याधायात्मनः प्राणमास्थितो योगधारणाम् ॥**

"जो वेदका ज्ञाता हुन्, ॐकार को जप गर्दछन् र जो ठुलाठुला संन्यासी ऋषि छन्, तिनीहरू ब्रह्ममा प्रवेश गर्दछन् । यस्तो सिद्धिको चाहना गर्नेहरू ब्रह्मचर्यव्रतको अभ्यास गर्दछन् । अब म तिमीलाई संक्षेपमा त्यो विधि बताउँदछु जसद्वारा मानिसले मुक्ति लाभ गर्न सक्दछ । इन्द्रियका समस्त क्रियाकलापहरूमा अनासक्त रहनु नै यौगिक अवस्था हो । इन्द्रियका सम्पूर्ण द्वाराहरू बन्द गरेर मनलाई हृदयमा र प्राणवायुलाई शिरको उच्च भागमा केन्द्रित गरेर मानिसले आफूलाई योगमा स्थापित गर्दछ ।" (गीता ८.११-१२) । योगविधिमा यसलाई प्रत्याहार भनिन्छ, जसलाई प्रविधिक भाषामा "विपरीत" भनिन्छ । आजभोलि हाम्रो आँखा बाह्य सांसारिक सुन्दरताको अवलोकन गर्न आकृष्ट भइरहेको छ, तर त्यसलाई बाह्य सुन्दरताको आनन्द लिनबाट खिचेर अन्तर्मुखी गराउनुपर्दछ । त्यसैलाई प्रत्याहार भनिन्छ । त्यसैगरी, उसले भित्रैबाट ॐकार को ध्वनि सुन्नुपर्दछ ।

**ओमित्येकाक्षरं ब्रह्म व्याहरन्मामनुस्मरन् ।**
**यः प्रयाति त्यजन्देहं स याति परमांगतिम् ॥**

"जसले योगाभ्यासमा स्थित रहेर, अक्षरहरूको परमसंयोग ॐकारको उच्चारण गर्दै भगवान्‌को चिन्तन गर्दछ र आफ्नो शरीर त्याग गर्दछ, उसले निश्चित आध्यात्मिक लोक प्राप्त गर्दछ ।" (भगवद्गीता ८.१३) । यसरी, सम्पूर्ण इन्द्रियहरूलाई बाह्य क्रियाकलापहरूबाट रोक्नुपर्दछ र मनलाई विष्णुमूर्तिमा एकाग्र गर्नुपर्दछ, यही नै योगसिद्धि हो । मन अत्यन्त चञ्चल छ, अतः उसलाई हृदयमण्डलभित्र दृढ गराउनुपर्दछ । जब मन हृदयमा स्थित हुन्छ र

प्राणवायु शिरको टुप्पोमा स्थिर हुन्छ, मानिसले योगसिद्धि प्राप्त गर्दछ ।

त्यसपछि उक्त सिद्ध योगीले आफू कता जाने भन्ने कुराको निर्णय गर्न सक्दछ । यस भौतिक जगत्मा असङ्ख्य भौतिक लोकहरू छन् र तिनीहरूभन्दा पनि पर आध्यात्मिक जगत् छ । योगीहरूले वैदिक शास्त्रहरूबाट यो कुराको जानकारी प्राप्त गरेका हुन्छन् । उदाहरणका लागी, अमेरिका जानुभन्दा पूर्व मैले पुस्तकबाट त्यहाँको बारेमा जानकारी प्राप्त गरको थिएँ । त्यसैगरी, शास्त्रमा उच्चतर लोक एवं आध्यात्मिक जगत्को वर्णन पाइन्छ । योगीलाई सम्पूर्ण कुराको ज्ञान हुने भएका कारण ऊ आफूले चाहेको लोकमा जान सक्दछ । उसलाई अन्तरिक्षयानको आवश्यकता पर्दैन ।

कैयौँ भौतिक वैज्ञानिकहरू अन्य लोकहरूमा जाने प्रयास गरिरहेका छन् र यसरी अझै सयौं वर्ष अथवा हजारौं वर्षसम्म प्रयास गरिरहेता पनि तिनीहरू अन्य लोकहरूमा जान सक्दैनन् । कुनै विशेष किसिमको वैज्ञानिक विधिद्वारा एक-दुइ मानिसहरू त्यस्ता केही लोकहरूमा पुग्न सक्लान्, तर यो साधारण विधि भने होइन । ध्यानयोग विधि अथवा ज्ञानयोग विधि नै अन्य लोकमा जाने साधारण विधि हो । तर, भक्तियोग चाहीँ कुनै पनि भौतिक लोकमा जानका लागि होइन । भगवान् श्रीकृष्ण अथवा परमेश्वरको भक्तिमय सेवामा तल्लीन रहने मानिस भने यस भौतिक जगत्भित्र रहेका कुनै पनि लोकमा जान चाहँदैन । किनकि उसलाई यस भौतिक जगत्भित्र जुनसुकै लोकमा पुगेतापनि त्यहाँ भौतिक जगत्का चार समस्याहरू हुन्छन् भन्ने कुराको ज्ञान हुन्छ । कुनै लोकमा प्राणीको जीवनावधि पृथ्वीलोकमा भन्दा बढी भएतापनि त्यहाँ मृत्यु अवश्य हुन्छ । तर,

कृष्णभावनाभावित भक्तले भने जन्म, मृत्यु, जरा र व्याधिले युक्त यस भौतिक जगत्लाई पार गर्दछ।

आध्यात्मिक जीवन भन्नु नै दुःखकष्टहरूबाट मुक्ति प्राप्त गर्नु हो। अतः बुद्धिमान मानिसले आफूलाई भौतिक जगत्भित्रका कुनैपनि लोकतर्फ लिएर जाने प्रयास गर्दैन। आजभोलि मानिसहरू चन्द्रलोक पुग्ने प्रयास गरिरहेका छन्। त्यहाँ भित्र प्रवेश गर्नु अत्यन्त कठिन छ। यदि हामीहरूले त्यो मौका प्राप्त गर्न सक्यौ भने हाम्रो आयु बढ्नेछ। यही शरीरमा चन्द्रलोक जान चाहेमा हाम्रो तत्काल मृत्यु हुने निश्चित छ।

यदि कुनै प्राणी कुनै लोकभित्र प्रवेश गर्दछ भने उसँग त्यस लोकको वातावरणसँग मिल्दोजुल्दो शरीर हुनुपर्दछ। प्रत्येक लोकमा त्यहाँको वातावरणसँग सुहाउँदो शरीरले युक्त जीवात्माहरू निवास गर्दछन्। उदाहरणार्थ हामीहरू यही शरीरमा जलभित्र प्रवेश गर्न सक्दछौं, तर त्यहाँभित्र निवास गर्न भने सक्दैनौं। हामी त्यहाँभित्र केवल १५-१६ घण्टा अथवा बढीमा २४ घण्टा पनि बस्न सक्दछौं। तर, जलचर प्राणीहरूसँग भने जलभित्रै सम्पूर्ण जीवन बिताउन सक्ने विशेष किसिमको शरीर हुन्छ। त्यसैगरी, यदि कसैले माछालाई पानीबाट बाहिर निकाल्दछ भने त्यो तुरुन्तै मर्दछ। हामीहरूलाई जानकारी भएअनुसार यही पृथ्वीलोक मा पनि कुनै निश्चित स्थानमा निवास गर्नका लागि प्राणीहरूसँग निश्चित किसिमको शरीर हुनुपर्दछ। त्यसैगरी, अन्य लोकभित्र प्रवेश गर्न चाहेको खण्डमा हामीहरूले पनि उचित किसिमको शरीर प्राप्त गर्ने प्रयास गर्नुपर्दछ।

यदि योगविधिद्वारा कुनै व्यक्ति चन्द्रलोकमा स्थानान्तरित भयो भने त्यहाँ उसको जीवन अवधि धेरै लामो हुन्छ। हाम्रो छ महिना उच्चलोक (स्वर्ग)को एक दिन बराबर हुन्छ। यसरी, त्यहाँ प्राणीहरू १०,०००

वर्षसम्म जीवित रहन्छन् । यही नै वैदिक शास्त्रहरूमा प्रदत्त जानकारी हो । अतः निसन्देह मानिसले त्यहाँ दीर्घजीवन प्राप्त गर्न सक्दछ, तैपनि त्यहाँ मृत्युको उपस्थिति हुन्छ । त्यहाँ दश हजार वर्ष, बीस हजार अथवा लाखौं वर्षपछि नै किन नहोस् मृत्यु अवश्यम्भावी छ ।

वास्तवमा, हामीहरू मर्न विवश छैनौं । यही कुरालाई भगवद्गीताको प्रारम्भ (२.२०) मा नै भनिएको छ, **न हन्यते हन्यमाने शरीरे ।** आत्मा भएका कारण हामीहरू शाश्वत छौं । त्यसोभए, किन हामीहरू आफैंलाई जन्मन र मर्न बाध्य गराउँदछौं ? यस्तो किसिमको विचार गर्नु अत्यन्त बुद्धिमतापूर्ण हुन्छ । कृष्णभावनाभावित मानिसहरू त्यस्ता लोकहरूमा जान चाहँदैनन् जहाँ दीर्घ जीवन भएता पनि मृत्यु अवश्यम्भावी हुन्छ । यसको विपरित तिनीहरू त ईश्वरको जस्तै शरीर प्राप्त गर्न चाहन्छन् । **ईश्वरः परमः कृष्णः सच्चिदानन्दविग्रह** (ब्रह्मसंहिता ५.१) भगवान्को शरीर सच्चिदानन्दमय छ । सत् भनेको “शाश्वत” हो । ‘चिद’ भनेको ‘ज्ञानले परिपूर्ण’ हो र आनन्द भनेको, “आनन्दले परिपूर्ण” हो ।

“रस सागर श्रीकृष्ण” नाम गरेको हाम्रो पर्चामा भनिएअनुसार यदि हामीहरू परमधाम, कृष्णलोक अथवा कुनै पनि वैकुण्ठधामभित्र प्रवेश गर्‍यौं भने हामीहरूले पनि भगवान् कृष्णको जस्तै सच्चिदानन्दमय (सत्यमय, चिन्मय र आनन्दमय) शरीर प्राप्त गर्दछौं । तसर्थ, यस भौतिक जगत्भित्रको कुनै एउटा उच्चलोकमा जाने प्रयास गरिरहेका मानिसहरूको भन्दा कृष्णभावनाभावित हुने प्रयास गरिरहेका मानिसहरूको जीवनको उद्देश्य बेग्लै हुन्छ । भगवान् कृष्ण भन्नुहुन्छ, **मुर्ध्न्याधायात्मनः प्राणमास्थितो योगधारणाम्** “योगको परम सिद्धि भन्नु नै मानिसलाई आध्यात्मिक जगत्मा पुऱ्याउनु हो ।” (भगवद्गीता ८.१२)

आत्मा शरीरभित्र हुने एउटा सूक्ष्म कण हो। हामीहरू आत्मालाई देख्न सक्दैनौं । व्यक्तिले शरीरको टुप्पोशिरमा आत्मालाई स्थित गराउनका लागि योगविधिको अभ्यास गर्न सक्दछन्। यो अभ्यास योगी जीवित रहेसम्म अगाडि बढी नै रहन्छ र शिरको टुप्पोमा अवस्थित भएर त्यसलाई फोरेर मात्रै उसले सिद्धावस्था प्राप्त गर्न सक्दछ । त्यसपछि उसले अनुसार जुनै उच्चलोकमा पनि स्वयंलाई स्थानान्तरण गर्न सक्दछ। त्यस नै त्यस योगी को सिधि हो।

यदि कुनै योगी चन्द्रमालाई हेर्न उत्सुक छ भने जसरी पर्यटकहरूले युरोप, क्यालिफोर्निया, क्यानडा लगायत विश्वका अन्य स्थानहरूको भ्रमण गर्दछन्, त्यसैगरी उसले पनि विचार गर्न सक्दछ, "अहो ! अब म चन्द्रमालाई हेर्नका लागि उच्चलोकमा जान चाहन्छु।" यो योगविधिद्वारा मानिस आफूले चाहेको जुनसुकै लोकमा पनि जान सक्दछ। तर, जहाँ गएपनि उसलाई प्रवेशाज्ञा एवं भन्सार नियम लागु हुन्छ किनकि ती लोकहरूमा जानका लागि पनि हामीहरू योग्य हुनुपर्दछ।

कृष्णभावनाभावित भक्तलाई अत्यन्त दीर्घायु जीवन प्रदान गरेतापनि ऊ कुनैपनि अस्थायी लोकमा जान इच्छुक हुँदैन । यदि मृत्युकालमा योगीले दिव्य ध्वनीको सार स्वरूप ॐ को उच्चारण गर्दै भगवान् कृष्ण अथवा विष्णुलाई स्मरण गर्दछ भने उसले सिद्धि प्राप्त गर्न सक्दछ (माम अनुस्मरण)। योगविधिको सम्पूर्ण उद्देश्य नै भगवान् विष्णुमा ध्यान एकाग्र गर्नु हो । निराकारवादीहरू आफूले भगवान् अथवा विष्णुको दर्शन गरेको कल्पना गर्दछन् तर साकारवादीहरू भने कल्पना नगरी प्रत्यक्ष उहाँको स्वरूप दर्शन गर्दछन्। चाहे कल्पनाद्वारा होस् अथवा साक्षाद् दर्शनद्वारा, मानिसले भगवान् विष्णुको स्वरूपमा नै ध्यान एकाग्र गर्नुपर्दछ। 'माम्' भनेको

"भगवान् विष्णु" भन्ने बुझिन्छ । शरीर त्याग गर्ने समयमा भगवान् श्रीविष्णुको चिन्तन गर्ने जोसुकै पनि आध्यात्मिक धामभित्र प्रवेश गर्न सक्दछन् । जो वास्तविक योगी हुन् तिनीहरू भौतिक जगत्भित्रका कुनै पनि लोकमा जान चाहँदैनन् किनकि ती अस्थाई लोकहरूमा जीवन अस्थाई छ भन्ने कुराको ज्ञान तिनीहरूलाई हुन्छ । यसर्थ, तिनीहरू त्यहाँ जान रूचि राख्दैनन् । यही नै बुद्धिमानी हो ।

भगवद्गीता (७.२३) का अनुसार ती मानिसहरू मूर्ख हुन् जो क्षणभङ्गुर जीवन, क्षणभङ्गुर सुख एवं सुविधाहरूमा सन्तुष्ट भएका हुन्छन् । **अन्तवत्तु फलं तेषां तद्वत्यल्पमेधसाम्:** "अल्पबुद्धिका मानिसहरू अस्थाई कुराहरूमा रुचि राख्दछन् ।" यही नै श्रीमद्भागवतको कथन हो । यदि म शाश्वत छु भने मैले किन यी क्षणभङ्गुर कुराहरूमा रुचि राख्ने ? कसले क्षणभङ्गुर जीवन चाहान्छ ? कसैले पनि चाहँदैन । यदि हामीहरू कुनै घरमा डेरा लिइ बसेका छौं र घर मालिकले हामीलाई घर छोड्ने आदेश दियो भने हामी दुःखी हुनेछौं । तर, यदि त्यो भन्दा पनि उत्तम घरमा सार्‍यौं भने हामी दुःखी हुँदैनौं । अतः यही नै हाम्रो झुकाव हो । सनातन जीव भएका कारण हामीहरू मर्न चाहँदैनौं ।

भौतिक वातावरणले हाम्रो शाश्वततालाई क्षीण गरिरहेको छ । श्रीमद्भागवतमा भनिएको छ– "सूर्यले आफ्नो उदय देखि अस्त सम्म हाम्रो जीवनावधिलाई क्षीण गराइरहेका छन् ।" प्रत्येक दिन हामीहरूले आफ्नो आयु घटाइरहेका छौं । यदि सूर्य ५:३० मा उदाउदछन् र ५:३० मा नै अस्ताउछन् भने हाम्रो जीवनको १२ घण्टा आयु नष्ट भएको हुन्छ । हामीहरूले कहिल्यै त्यो समयलाई फिर्ता पाउन सक्दैनौं । यदि हामीहरूले कुनै वैज्ञानिकलाई गएर, "वैज्ञानिक ज्यू ! म हजुरलाई एक करोड रूपैयाँ दिन्छु, कृपया मेरो १२ घण्टा समय फिर्ता दिनुहोस् ।"

भन्दछौं भने उसले भन्नेछ- "अहँ ! यो सम्भव छैन । वैज्ञानिकहरू यो कार्य गर्न सक्दैनन् । अतः भागवतमा सूर्योदयदेखि सूर्यास्तसम्म हाम्रो जीवनावधि क्षीण भइरहेको कुरा उल्लेख गरिएको छ ।

समयलाई काल भनिन्छ जुन भूत, भविष्य र वर्तमान गरी तीन किसिमका हुन्छन् । अहिले भइरहेको समयलाई वर्तमान भनिन्छ त्यही समय भोलि भूत बन्दछ र अहिले जुन काल भविष्य छ, त्यही काल भोलि आउनेछ । यी भूत, वर्तमान र भविष्यहरू त शरीरका भूत, वर्तमान र भविष्यहरू हुन् । तर, हामीहरू भने भूत, भविष्य एवं वर्तमान कुनै पनि कालको कोटीमा पर्दैनौं । हामीहरू त शाश्वत कोटीमा पर्दछौं । अतः मानिसले कसरी शाश्वत जीवनलाई प्राप्त गर्न सकिन्छ भन्ने कुराको जिज्ञासा गर्नुपर्दछ । मानवजातिको उन्नत चेतनालाई केवल आहार, निद्रा, भय र मैथुनजस्ता पशुप्रवृत्तिहरूमा संलग्न नगराई त्यस्तो अमूल्य पथको खोजी गर्न लगाउनुपर्दछ, जसबाट उसले शाश्वत जीवलाई प्राप्त गर्न सकोस् । भनिएको छ, सूर्यले प्रतिमिनेट, प्रतिघण्टा, प्रतिसेकेन्ड हाम्रो आयुलाई नष्ट गरिरहेका छन् तर हामीहरू भने भगवान् (उत्तमश्लोक) को विषयमा चर्चा परिचर्चा गरेर दिन बिताउने गर्दछौं, जसका कारण कालले हामीलाई हरण गर्न सक्दैन । कृष्णभावनाको मन्दिरमा आजीवन सेवारत भक्तलाई कालले हरण गर्न सक्दैन । यो हानि नभएर लाभ हो । जहाँसम्म शरीरको आयु छ, त्यो अन्त हुनेछ । कसैले यसलाई जीवित राख्ने प्रयास गरेता पनि, त्यो सम्भव छैन । तर, कृष्णभावनामृत आन्दोलनद्वारा हामीहरूले प्राप्त गर्ने आध्यात्मिक ज्ञान भने सूर्यले हरण गर्न सक्दैनन् किनकि त्यो हाम्रो शाश्वत धन हुनेछ ।

**'हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे । हरे राम हरे राम राम राम हरे हरे ॥'** यो महामन्त्रको जप एवं कीर्तन गर्ने कार्य अत्यन्त

सरल छ। अटुट एवं अनवरत रूपमा गरिने भगवन्नामको जप एवं कीर्तनलाई शरीरसँग सम्बन्धीत काललें हरण गर्न सक्दैन। पचास वर्ष पहिले म युवक थिएँ, तर आज समयले मेरो आयु हरण गरिसकेको छ जसलाई म फिर्ता पाउन सक्दिन। तर, मैले आफ्ना पूज्य गुरुदेवबाट प्राप्त गरेको ज्ञान भने कसैले पनि हरण गर्न सक्दैन, त्यो त म सँगै रहिरहनेछ। मैले शरीर छोडे पनि यो ज्ञान मसँग नै जानेछ। यदि यही जीवनमा यसले सिद्धि प्राप्त गर्‍यो भने त्यसले मलाई नित्यधामतर्फ लिएर जानेछ।

दुवै भौतिक एवं आध्यात्मिक जगत्हरू भगवान् कृष्णका सम्पत्तिहरू हुन्। हामीहरू कुनै पनि कुराका अधिपति होइनौं। चाहे बन्दीगृह बाहिर हुन् अथवा बन्दिगृहभित्र सम्पूर्ण नागरिकहरू सरकारका सम्पत्तिहरू नै हुन् त्यसैगरी जगत्का सम्पूर्ण कुराहरू भगवान् कृष्णकै सम्पत्ति हुन्। बद्धजीवन यस भौतिक जगत्भित्र हुने बन्दीगृहको जीवन जस्तै हो। एउटा कैदीले स्वच्छापूर्वक आफ्नो आवास बदल्न सक्दैन। स्वतन्त्र जीवनमा मानिस घरघर घुम्न सक्दछ तर, कैदी जीवनमा ऊ केवल एउटै कोठामा बस्दछ। हामीहरू चन्द्रलोक जाने प्रयास गरिरहेका छौं तर, भौतिक साधनद्वारा त्यो कार्य व्यावहारिक हुन सक्दैन। रसियाली, चिनियाँ, भारतीय आदि जोसुकै भएता पनि हामीहरूलाई जिउनका लागि यही लोक प्रदान गरिएको छ। पृथ्वीबाहिर हजारौं लाखौं लोकहरू छन् र त्यहाँ जानका लागि हामीहरूसँग सक्षम साधनहरू भएता पनि हामीहरूले पृथ्वीलोक छोड्न सक्दैनौं किनकि हामीहरू प्रकृतिको नियम अथवा ईश्वरको नियमद्वारा बद्ध छौं। कुनै एउटा निश्चित कोठामा कैद भएको मानिसले उच्च अधिकारीको सहायता बिना आफ्नै इच्छाले स्थान बदल्न सक्दैन। मानिसले एक पछि अर्को कोठा बदल्ने प्रयास गर्नुहुँदैन

भन्ने कुरा भगवद्गीतामा भगवान् कृष्ण भन्नुहुन्छ । त्यो कार्यले कसैलाई पनि सुखी बनाउँदैन । कुनै कैदीले, "अहिले म यो कोठामा छु । यदि मैले नजिकैको हवलदारलाई यहाँबाट मुक्त गरिदिन अनुरोध गरे भने मेरो जीवन धन्य हुने थियो ।" भन्ने विचार गर्न सक्दछ, तर त्यो उसको त्रुटिपूर्ण विचार हो । भ्यालखानाभित्र रहुन्जेलसम्म कोही पनि सुखी रहन सक्दैन । हामीहरू समाजवादी कक्षबाट पूँजीवादी कक्ष तथा पूँजीवादी कक्षबाट समाजवादी कक्षमा परिवर्तन हुँदै सुखी रहन प्रयासरत छौं । तर, हाम्रो उद्देश्य यी सम्पूर्ण वादहरूबाट मुक्ति प्राप्त गर्ने हुनुपर्दछ । मानिस पूर्णरूपले यी 'वादहरूको' भौतिकवादी अवधारणाबाट मुक्त हुनुपर्दछ र त्यसपछि मात्रै ऊ सुखी रहन सक्दछ । यही नै कृष्णभावनामृत आन्दोलनको उद्देश्य हो ।

हामीहरू परमपुरुष भगवान्सँग ज्ञान ग्रहण गर्दछौं । उहाँ भन्नुहुन्छ, " हे अर्जुन ! तिमीले ब्रह्मलोक नामले प्रसिद्ध सर्वोच्च लोकलाई प्राप्त गर्न सक्दछौ । त्यहाँ जाने चाहना राख्नु वाञ्छनीय हो किनकि त्यहाँ दीर्घायु जीवन हुन्छ ।" हामीहरूले त त्यहाँको आधा दिनलाई पनि गणना गर्न सक्दैनौं । अतः भगवान् कृष्ण भन्नुहुन्छ, "यो लोकदेखि त्यो लोक अथवा त्यो लोक देखि यो लोक भ्रमण गर्ने कार्यमा जीवन नष्ट नगर ।"

मैले अमेरिकामा मानिसहरू अत्यन्त अस्थिर भएको देखेको छु । त्यहाँका मानिसहरू एकपछि अर्को आवास अथवा एक पछि अर्को देश भौतारिरहने गर्दछन् । तिनीहरू आफ्नो वास्तविक घरको खोजीमा रहेका कारण, त्यहाँ त्यो अस्थिरपन विद्यमान हुनु स्वाभाविक हो । एकपछि अर्को स्थान बदलेर मात्रै शाश्वत जीवन प्राप्त गर्न सकिंदैन । शाश्वत जीवन त केवल भगवान् कृष्णसँग प्राप्त गर्न सकिन्छ । अतः भगवान् कृष्ण भन्नुहुन्छ "म नै सम्पूर्ण कुराहरूको

मालिक हुँ, मेरो एउटा उत्तम धाम छ, जसलाई गोलोक वृन्दावन धाम भनिन्छ।" यदि कुनै मानिस त्यहाँ जान चाहान्छ भने, ऊ केवल कृष्णभावनाभावित बन्नुपर्दछ। यसका अतिरिक्त उसले कसरी भगवान् कृष्ण यस धर्तीमा प्रकट हुनुहुन्छ अथवा अप्रकट हुनुहुन्छ ? उहाँको सनातन स्वरूप के हो, उहाँसँग हाम्रो कस्तो सम्बन्ध छ, अथवा हामी उहाँसँग कसरी रहन सक्दछौं भन्ने जस्ता कुराहरूलाई जान्ने प्रयत्न गर्नुपर्दछ । केवल यी विचारहरूलाई वैज्ञानिक ढङ्गले बुझ्ने प्रयास गर्नुपर्दछ। कृष्णभावनामा सम्पूर्ण कुराहरू वैज्ञानिक छन्। यो निरर्थक मनगढन्ते, भावुक, हठधर्मी एवं काल्पनिक विषयवस्तु होइन । कृष्णभावना त सत्य, तथ्य एवं वास्तविकता हो। मानिसले भगवान् कृष्णको सत्य ज्ञान लिनुपर्दछ।

हामीहरूले चाहँदा नचाहँदै पनि शरीर छोड्नुपर्दछ। त्यो दिन अवश्य आउने छ जुन दिन हामीले प्रकृतिको नियम समक्ष आफ्नो आत्मसमर्पण गर्नुपर्नेछ र आफ्नो भौतिक शरीर त्याग गर्नुपर्नेछ । राष्ट्रपति केनेडीले पनि आफ्नो शवयात्राका दौरान प्रकृतिको नियम समक्ष आत्मसमर्पण गरेका थिए र अर्को शरीर धारण गर्नका लागि आफ्नो शरीर त्याग गरेका थिए। उहाँले भन्न सकेनन्, अहो ! म अमेरिकाको राष्ट्रपनि श्रीमान् केनेडी हुँ, म मर्न सक्दिन। तर, उहाँलाई मर्न बाध्य गराइयो । प्रकृतिले त्यसैगरी आफ्नो कार्य गर्दछिन् ।

प्रकृतिले कसरी कार्य गर्दछिन् भन्ने कुरा जान्नु नै मानव चेतनाको उउटै उद्देश्य हो । मनुष्यबाहेक पनि कुकुर बिरालो किरा-फट्याङ्ग्रा पशुपंक्षीलगायतका सम्पूर्ण प्राणीमा चेतना हुन्छ। तर, हामीहरू भने तिनीहरूको जस्तो चेतनामा जिउनका लागि होइनौं। हामीहरूले अनेकौं जन्मपश्चात् मानवजीवन प्राप्त गरेका

छौं भन्ने कुरा श्रीमद्भागवतमा वर्णन गरिएको छ । यसपटक भने हामीहरूले मानवजीवनको दुरुपयोग गर्नुहुँदैन । तपाईंले आफ्नो मानव जीवन कृष्णभावनाको विकास गर्नका लागि सदुपयोग गर्नु होस् र शाश्वत सुख प्राप्त गर्नु होस् ।

समाप्त

# लेखक परिचय

कृष्णकृपामूर्ति अभयचरणाविन्द भक्तिवेदान्त स्वामी प्रभुपाद १८९६ मा यस पृथ्वीको कलकत्तामा प्रकट हुनुभयो। उहाँले आफ्ना आध्यात्मिक गुरु श्रील भक्तिसिद्धान्त सरस्वती गोस्वामीसंग १९२२मा कलकत्तामा भेट गर्नुभयो। त्यससमयमा अत्यन्त विद्वान् र भक्त श्रील भक्तिसिद्धान्तले गौडिय मठको स्थापना गर्नुभयो। उहाँले यी शिक्षित युवालाई मन पराउनुभयो र वैदिक ज्ञानको शिक्षा प्रदान गर्न आफ्नो जीवन उत्सर्ग गर्न प्रेरित गर्नुभयो। श्रील प्रभुपाद उहाँको विद्यार्थी बन्नुभयो र एघार वर्ष पछि १९३३ मा इलाहवादमा विधिवत् दीक्षित शिष्य बन्नुभयो।

१९२२ को पहिलो भेटमा नै श्रील भक्तिसिद्धान्त सरस्वती ठाकुरले श्रील प्रभुपादलाई वैदिक ज्ञानलाई अङ्ग्रेजी भाषामा प्रचारप्रसार गर्न आग्रह गर्नुभएको थियो। त्यसको केही वर्षपछि श्रील प्रभुपादले वैदिक ग्रन्थको अति महत्त्वपूर्ण भगवद्गीतामा टिप्पणी वा तात्पर्य लेख्नुभयो। साथै गौडिय मठको कार्यलाई पनि सहयोग गर्न सुरु गर्नुभयो। १९४४ मा आफू एक्लैले "ब्याक टु गडहेड" नाम गरेको पाक्षिक पत्रीका अङ्ग्रेजीमा प्रकाशित गर्न सुरु गर्नुभयो। उहाँ आफैंले पाण्डुलिपी तयार गर्ने, शुद्धाशुद्धी जाँच गर्ने र प्रकाशित प्रति निशुल्क वितरण गर्दै बडो सङ्घर्ष गर्दै प्रकाशनलाई निरन्तरता दिनुभयो।

१९४७ मा श्रील प्रभुपादको दार्शनिक विद्वत्ता र भक्ति देखेर गौडिय वैष्णव समाजले उहाँलाई "भक्तिवेदान्त" को पदले अलंकृत गऱ्यो। १९५० मा चौवन्न वर्षको उमेरमा श्रील प्रभुपादले पारिवारीक

जीवनबाट निवृत्ति लिनुभयो। त्यसको चार वर्षपछि वानप्रस्थ आश्रममा प्रवेस गरेर आफ्नो समय अध्ययन र लेखन कार्यमा प्रयोग गर्नका लागि पवित्र सहर वृन्दावन जानुभयो। त्यहाँ उहाँ ऐतिहासिक श्रीश्रीराधादामोदर मन्दिरको सानो कोठामा बसेर गहन अध्ययन र लेखन कार्य गर्दै धेरै वर्ष बिताउनुभयो। १९५९ मा उहाँले संन्यास लिनुभयो। त्यस श्रीश्रीराधादामोदर मन्दिरमा बसेर श्रील प्रभुपादले "इजी जर्नी टु अदर प्लानेट" र वैदिक साहित्यको सार वा मख्खनरूपी अठार हजार श्लोक भएको धेरै खण्डको श्रीमद्‌भागवतको अनुवाद, तात्पर्य लेख्न प्रारम्भ गर्नुभयो। जुन उहाँको जीवनको श्रेष्ठ कृति नै हो।

श्रीमद्‌भागवतको तीन खण्ड प्रकाशन गरेपछि १९६५ मा आफ्ना गुरुको उद्देश्य पूर्ण गर्न अमेरिका आउनुभयो। त्यसपछि उहाँले भारतको दार्शनिक र धार्मिक विषयमा पचास भन्दा बढी आधिकारीक अनुवाद, तात्पर्य र विश्लेषक अध्ययनरूपी पुस्तक लेख्नुभयो। जब श्रील प्रभुपाद पानीजहाजबाट न्युयोर्क सहर आउनुभयो त्यस समय उहाँ व्यावहारिक रूपले अर्थ धन रहित हुनुहुन्थ्यो। तर एक वर्षसम्मको यस्तो दुःखपूर्ण अवस्था पछि १९६६ मा उहाँले "अन्तर्राष्ट्रिय कृष्णभावनामृत सङ्घ" को स्थापना गर्नुभयो। १४ नोभेम्बर १९७७ मा दुःखमय अप्रकट हुनु अघि उहाँले सय भन्दा बढि आश्रम, पाठशाला, मन्दिर, प्रतिष्ठान र कृषि उद्यमस्थलको नेतृत्त्व लिएर त्यसलाई पथप्रदर्शन गर्दै संसारभर विकसित भएको हेर्नुभयो।

१९६८ मा श्रील प्रभुपादले पश्चिम भर्जिनियाको पहाडमा वैदिक समाजरूपी नयाँ वृन्दावन स्थापना गर्नुभयो। यस वैदिक

समाजको सफलताबाट प्रेरित भएर उहाँका शिष्यहरूले अमेरिका र अन्य देशमा यस्ता समाजहरूको निर्माण गरे।

१९७५ मा श्रील प्रभुपादको कल्पना अनुसारको वृन्दावनमा अत्यन्त सुन्दर "कृष्णबलरामको मन्दिर" र अन्तर्राष्ट्रिय स्तरको अतिथिगृहको निर्माण प्रारम्भ भयो। १९७८ मा जुहु, बम्बईमा चार एकड जमिनमा मन्दिर, आधुनिक रङ्गमंच, अतिथिगृह र शाकाहारी भोजनालय मिश्रित सांस्कृतिक स्थलको निर्माण प्रारम्भ गर्नुभयो। पचास हजार भक्त निवास गर्ने मायापुर, पश्चिम वङ्गालमा महत्त्वाकाङ्क्षी परियोजना श्रील प्रभुपादको हुनसक्दछ र पाँच हजार वर्ष अधिको वैदिक जीवनको सानो नमुनाकोरूपमा श्रीधाम मायापुरमा सम्पूर्ण विश्वको अघि उपस्थित हुनेछ।

श्रील प्रभुपादले वैदिक पद्धितको प्रारम्भिक र उच्चस्तरको शिक्षा पश्चिम जगत्लाई प्रदान गर्नुभयो। १९७२ मा गुरुकुल स्थापना गरिएको हो तैपनि अहिले सयौं विद्यार्थी र धेरै शाखा संसारभरी खुलेका छन्।

श्रील प्रभुपादको सबैभन्दा सार्थक र महत्त्वपूर्ण योगदान भनेको निश्चय नै उहाँका पुस्तकहरू नै हुन्। वौद्धिक समाजले यी पुस्तकहरूलाई यिनको आधिकारीता, गहिराइ र स्पष्टताका लागि सम्मान गर्दछन्। त्यसैले, यी पुस्तकहरू धेरै महाविद्यालयहरूमा विषयगत पाठ्यपुस्तकको रूपमा अध्ययन गराइन्छ। अर्को थप कुरा श्रील प्रभुपादका पुस्तकहरू विश्वका अन्य पचास भाषामा अनुवाद गरिएको छन्। १९७२ मा स्थापना गरिएको "भक्ति वेदान्त बुक ट्रस्ट" को प्राम्भिक कार्य भनेको श्रील प्रभुपादका पुस्तकहरूको प्रकाशन गर्नु हो। त्यसैले, अहिले यो प्रकाशन संस्था भारतीय धर्म र दर्शन सम्बन्धी पुस्तक

प्रकाशन गर्ने संसारको सबैभन्दा विशाल संस्था भएको छ। वर्तमानमा यस संस्थाको योजना भनेको सत्र खण्डमा रहेको बंगाली चैतन्य–चरितामृतको अनुवाद र तात्पर्य प्रकाशन गर्नु रहेको छ। श्रील प्रभुपादले केवल अठार महिनामा त्यो कार्य पूरा गर्नु भएको थियो। आफ्नो वृद्ध अवस्था भएपनि श्रील प्रभुपादले बाह्र वर्षमा छ महाद्वीपको चौध पटकसम्म प्रवचन भ्रमण गर्नु भएको थियो। यस्तो व्यस्त कार्यक्रम भएपनि श्रील प्रभुपादले आफ्नो लेखन कार्य जारी राख्नुभयो। उहाँका लेखन वैदिक दर्शन, धर्म र संस्कृतिको पुस्तकालय नै हो।



**अन्तरिक्ष एउटा अन्तिम प्रदेश**

मानिसहरूले सधैं अन्य लोकको यात्रा गरी, अन्तरिक्षमाथि विजय प्राप्त गर्ने सपना देखिरहेका छन् । विज्ञानले तिनीहरूका गूढ आकांक्षालाई सार्थक गरिदिनका लागि अन्तरिक्षयान एवं क्षेप्यास्त्र यानको आविष्कार गरेको छ । विज्ञानका यी आविष्कारहरू त्यति सफल भइरहेका छैनन् ।

तर, यस पुस्तकमा भने अन्य लोकमा जाने एउटा प्राचीन एवं रोमाञ्चक विधिको खोजी गरिएको छ ।



भक्तिवेदान्त बुक ट्रस्ट